

# समाज अध्ययन

अंक १७ । वि.सं. २०७९ । सन् २०२२

यसभित्र

- ऐतिहासिक प्रतिरोध गाथा
- पञ्चायतकालीन डोल्पामा निर्वाचन
- मधेसी र पहाडीको अन्तरजातीय प्रेम र विवाह
- हरिहर संस्कृत पाठशालाको इतिवृत्त • पुस्तक समीक्षा
- महामारीमा विद्यालय शिक्षा • पोखराको आगलागीको अभिलेख
- अनौपचारिक क्षेत्रमा संरचनात्मक रूपान्तरणको सम्भावना
- प्रारम्भिक अनुसन्धानकर्मीका चुनौती
- उच्च शिक्षा सम्बन्धी संस्मरणहरू
- मनाङको माक्पा विवाह

# सितला माजुया म्ये : प्रतिरोधको ऐतिहासिक गाथा

**राजेन्द्र महर्जन**

स्वामि जुजुया धर्म मदया
कचिमचा वाके छोत
वनेमाल तामाखुसि पारि
नेपालया छत्रपति श्री रणबहादुर
परजान अति दुःख सिल ।

(स्वामी महाराजमा धर्म नभएकोले
नाबालकहरू फाल्न पठाए
जानुपऱ्यो तामाकोशी पारि
नेपालका छत्रपति श्री रणबहादुर
प्रजाले अति दुःख पाए)

नेपालभाषामा प्रचलित "बाखं म्ये" (गीतिकथा वा गीतिकाव्य) हो—"सितला माजुया म्ये" ।[1] काठमाडौँ उपत्यकाका धेरैजसो दाफामा गाइने "सितला माजुया म्ये" शीतला माईलाई गरिएको पुकार हो । यो गीतिकथा खासमा महामारीको गीत हो, महामारीमा शासकहरूले थोपर्ने राजनीतिक महाव्याधिको कथा हो ।[2] नेवारहरूले दुई सय वर्ष

[1] "सितला माजुया म्ये" का अनेक संस्करण भेटिएका छन् । यहाँ प्रेमबहादुर कसाद्वारा संकलित *बाखं म्ये*मा रहेको "सितला माजु" (कसा ने.सं. १०९३ : ७४–७८) र हरि श्रेष्ठद्वारा खस नेपाली भाषामा अनुवाद भएको "सितला माई" गीतिकथा (श्रेष्ठ २०३१ : १३–१६) लाई आधार मानेको छु । श्रेष्ठद्वारा अनूदित गीतिकथामा रणबहादुर शाहको नामै किटेर गरिएको आलोचनाको भाग छैन । प्रज्ञा प्रतिष्ठान "रोयल" वा "राजकीय" रहेको बेला शाहवंशीय राजाको आलोचना गरिएको अनुच्छेद समावेश गर्न कठिन भएको हुन सक्छ । कसाद्वारा संकलित गीत परिशिष्ट क र श्रेष्ठद्वारा संकलित परिशिष्ट ख मा हेर्न सकिन्छ ।

[2] कसाले काठमाडौँमा गाइने मात्रै होइन, ठिमीमा गाइने अलग्गै गीत पनि संकलन गरेका थिए । ठिमीमा गाइने गीतमा ठिमी र भक्तपुरका बालबालिकालाई पनि देशनिकाला गरिएको

*समाज अध्ययन* १७ : ३५–६६, २०७९

अघिदेखि गाउँदै आएको यो गीतले “तःकै” (शीतला वा बिफरको रोग) ले महामारीको रूप लिएपछि नेपालका शासकले चलाएको सामूहिक विस्थापनको पीडा र प्रतिरोधको ऐतिहासिक गाथा कहन्छ, जसको इतिहास लेखिएको छैन । यस गीतमा “स्वामी महाराज” मा धर्म वा विवेक नहुँदा प्रजाले दुःख पाए भन्दै राजा रणबहादुर शाहलाई नाम काढेरै आलोचना गरिएको छ ।

नेपालमा सत्ता-केन्द्रित इतिहास लेखनको प्रवृत्ति बलवान छ । इतिहास लेखनमा स्थानीय वा क्षेत्रीय इतिहास लेखन, जनताको इतिहास लेखन र सीमान्तकृतको इतिहास लेख्ने कोसिस नभएको होइन, तर त्यसको अवस्था निम्छरो छ । विशेष रूपमा, जन इतिहासको निर्माणमा जनताद्वारा निर्मित, जनतामा निहित लोक संस्कृतिका विभिन्न आयामको सदुपयोग नहुनु त्यस्तो लेखनको अर्को सीमा हो । झन् सत्ता-शक्तिमा रहेकाहरूले गरेका ज्यादती विरुद्धको प्रतिरोधी साहित्य त नेपाली समाजको इतिहासमा भेट्टाउन कठिन छ । खस नेपाली भाषामा समेत प्रतिरोधी साहित्यलाई समेटेर सामाजिक-साँस्कृतिक इतिहास लेखन बलियोसँग स्थापित भइसकेको छैन । यस्तो अवस्थामा विभिन्न राष्ट्रभाषामा सिर्जना भएका प्रतिरोधी साहित्यबारे अध्ययन र अनुसन्धानसँगै त्यसको जगमाथि टेकेर गरिने सामाजिक-साँस्कृतिक इतिहास लेखन कम हुनु अनौठो होइन । यो लेखमा अध्ययन सामग्री र ज्ञानको सीमाबीच राज्यले महामारीको नाममा गरेको दलन र “सितला माजुया म्ये” को इतिहासलाई रेखांकन गर्ने कोसिस गरिएको छ । यो गीत कुनै रोगले ल्याएको महामारीसँग मात्रै सम्बन्धित नभई राजनीतिक-साँस्कृतिक हिंसासँग पनि जोडिएको कथा हो । शाहवंशका राजाहरूले सैनिक अभियान मार्फत गोरखा राज्यको भूभाग विस्तार गर्ने क्रममा नेपाल खाल्डोमाथि विजय हासिल गरेको तेस्रो दशकबीच भएको यो सामूहिक विस्थापनमा कुनै अमूक सत्तासीन मात्रै होइनन्, राज्य नै संलग्न रहेको छ ।

“हाम्रासामु उपलब्ध शासक केन्द्रित इतिहासले सत्तासीनहरूलाई कि देवतुल्य देखाएका छन् कि दानवतुल्य” (राज २०६९ : १२) । यस प्रवृत्तिबाट रणबहादुर शाहका काम कारबाहीलाई गरिएको मूल्यांकन पनि पृथक् छैन । केही इतिहासकारका निम्ति रणबहादुरको “प्रगतिशीलता र सुधारवाद” तथा उनले काँधमा बोकेका काजी भीमसेन थापाको “महान् देशभक्ति” सर्वाधिक उल्लेखनीय छन् (नेपाली २०२०, २०६०; शर्मा २०३३ : २८६) । र, केही इतिहासकार रणबहादुरको सन्काहापनलाई वीर गोरखाली जाति र राष्ट्रिय एकीकरण गर्ने शाहवंशको कलंकको रूपमा तथा भीमसेन थापालाई अदूरदर्शी शासक र निरंकुश अधिनायकका रूपमा स्थापित गर्न लागिपरेका देखिन्छन् (नेपाल २०५०; आचार्य २०६९) । तर नेपालको शासक-केन्द्रित इतिहासमा कम मात्रै

---

घटना उल्लेख गरिएको छ (कसा ने.सं. ११०० : १) । त्यस्तै, सुनील उलकले उपलब्ध गराएको भक्तपुरमा गाइने गीत श्रेष्ठ (२०७७) मा सुन्न सकिन्छ ।

उल्लेख हुने घटना हो—रणबहादुरले दरबार र परिवारजनमा बिफरका कीटाणु नसरून् भन्ने बहानामा काठमाडौँ उपत्यका भित्रका बिफर रोग नलागेका बालबालिका र तिनका अभिभावकलाई देश निकाला गरेको सन्दर्भ ।[३] सरकारी इतिहासकारहरूले बेवास्ता गरे पनि अज्ञात कविलाई भने हजारौँ बालबालिका र उनीहरूका अभिभावकलाई सिपाही लगाएर देशबाट धपाएको दमनकारी घटनाले पिरोलेको देखिन्छ । त्यसैले उनले सामूहिक विस्थापनलाई नेपालभाषाको साहित्यिक सिर्जनाको रूपमा ढालेको पाइन्छ । यही साहित्यबाट त्यस समाजमा सत्तासीन वर्गले सर्वसाधारण जनतामाथि महामारीमा गरेको दलन-उत्पीडनको प्रतिरोध गरेको देख्न सकिन्छ । गीतिकथाको रूपमा लेखिएको सामाजिक इतिहासको ऐनामा कोरोना वा भूकम्पजस्ता महाविपत्तिमा वर्तमान शासकहरूका चिन्तन र व्यवहार पनि हेर्न सकिन्छ ।

यो लेखको अबको खण्डमा नेपालको इतिहासमा गीत र गीतमा देखिएको इतिहासको एक झलक प्रस्तुत गरिएको छ । त्यसपछि बिफर घटनाको पृष्ठभूमि सहित इतिहासमा सो घटनालाई कसरी चित्रित गरिएको छ भन्ने चर्चा छ । त्यस पछिको खण्डमा "सितला माजुया म्ये" ऐतिहासिक गीतका शब्द, भाव र संकेत पर्गेलेर यो विषयलाई इतिहासभित्र खोतल्ने कोसिस गरिएको छ । त्यस पछिको खण्डमा सो गीतको इतिहासलाई अझ पुष्टि गर्ने गरी सुन्दरानन्द बाँडाले १८८० सालतिर लेखेको "त्रिरत्न सौन्दर्यगाथा" कवितामाथि चर्चा गरिएको छ, जसमा काठमाडौँबासीलाई धपाइएको र पछि उनीहरू फर्केको कथा पाइन्छ । त्यस पछिको खण्डमा माथिका दुई काव्यमा व्यक्त प्रतिरोधको चर्चा गरिएको छ । अन्तमा निष्कर्ष दिइएको छ ।

## नेपालमा जनमुखी गीति इतिहास

भारतमा अधीनस्थ (सबाल्टर्न) समुदायको दृष्टिकोणबाट जन-उन्मुखी इतिहास लेखनको बलियो जग हालिएको छ, जसले विशेष गरी क्षेत्रीय आन्दोलनसँगै किसान-मजदुरका संघर्षबारे अध्ययन गर्दै मूलधारको राष्ट्रवादी इतिहास लेखनको मजबुत ढाँचामा ठूलै छिद्र बनाएको छ । बाह्य साम्राज्यसँगै आन्तरिक शक्ति संरचना विरुद्ध अधीनस्थ समुदायले गरेका प्रतिरोधको अलिखित इतिहासलाई लिखित रूप दिने वा इतिहासको

[३] बिफर "कोभिड-१९" जस्तै भाइरस संक्रमणबाटै फैलिने प्राणघातक रोग हो । भाइरसले शरीरमा हमला गरेपछि त्योसँग लड्ने "एन्टिबडी" विकास हुन्छ । भाइरस लागेर निको भएको व्यक्तिलाई त्यही भाइरसले छुँदैन, छोए पनि गम्भीर बिरामी पार्दैन । त्यसैले बिफर लागिसकेका केटाकेटीमा संक्रमणको खतरा थिएन । तर जसलाई उक्त रोगले छोएको थिएन, उनीहरू संक्रमित हुनसक्ने उच्च जोखिम थियो । त्यही भएर रणबहादुरले देश निकाला गर्दा "बिफर नलागेका" केटाकेटी छाने (श्रेष्ठ २०७७) ।

पुनर्निर्माण गर्ने (हिस्टोरियोग्राफी) कामको आफ्नै सार्थकता छ, निश्चित सीमा हुँदाहुँदै पनि। सबाल्टर्न इतिहास लेखनले सँगेट्न नसकेको लोकसंस्कृति र प्रतिरोधका बहुआयामिक अन्तरसम्बन्धलाई अन्य इतिहासकारले अगाडि बढाइरहेका छन्। नेपालमा पनि मेरी डेशेनले लाहुरे निर्माणबारे (डेशेन सन् १९९१), प्रत्यूष वन्तले "वीर इतिहास" को लेखनबारे (वन्त सन् १९९६) र योगेश राजले महारोगीहरूबारे अध्ययन र लेखन (राज सन् २००७) गरेको देखिन्छ।

शाह कालअघि "देश भाषा" र "राष्ट्र भाषा" को मान्यता पाएको नेपालभाषामा धर्म-कर्म र सत्ता-शक्तिसँग जोडिएको साहित्यको इतिहास लामो छ, सम्भवतः त्यत्तिकै पुरानो छ सत्ता-शक्तिविरुद्ध लेखिएको वा गाइएको प्रतिरोधी साहित्यको विगत पनि। "सिलु म्ये," "ङ हुने श्री भैरव" (भैरव स्तुति) र "सितला माजुया म्ये" रचनासँगै गायनको चलन कायम रहेको छ (श्रेष्ठ २०४५ : ३४–४१; मल्ल २०४५ : ७४–८०)। परिवार, समाज र राज्यमा भएका असमान शक्ति-सम्बन्ध तथा त्यसले सिर्जना गर्ने उत्पीडन एवं बेथितिलाई उजागर गर्ने तथा त्यसको प्रतिरोध गर्ने कर्मलाई प्रोत्साहित गर्ने परम्परा भएकै कारण सर्वसाधारण कविका रचनामा राजारानी र दरबारिया कविको भन्दा भिन्नै खालका रचना निर्माण भएको पाइन्छ (महर्जन २०७७ख)। चाहे मल्ल शासनकाल होस् या शाहवंशीय तन्त्र, नेपालभाषामा रचना गर्ने आम स्रष्टाले शासक र सामन्तहरूको शोषण-उत्पीडन, अन्याय-अत्याचारलाई निर्भीकतापूर्वक आफ्नो रचनामा अभिव्यक्त गरेको पाइन्छ। मल्ल कालमा "संसारया कारण" र "सिलुतीर्थया म्ये" जस्ता रचनामा आर्थिक, साँस्कृतिक र राजनीतिक परिवेशलाई उजागर गर्दै गोप्य प्रतिरोधको आयाम देखाइएको छ।[४] शाह शासनकाल शुरू भएपछि पनि परिवार, समाज र राज्य भित्रका द्वन्द्वलाई काव्यमा, विशेषतः गीतिकथामा, ढाल्ने क्रम आफ्नै लयमा जारी रहेको पाइन्छ। प्रतापसिंहदेखि राजेन्द्रविक्रमको शासनकाल सम्मको समयावधिभित्र सामाजिक, यथार्थपरक, कथात्मक गीतको रचना धेरै भएको देखिन्छ। शासक तथा सामन्तहरूका अन्याय-अत्याचारको भण्डाफोर, वैदेशिक रोजगारका लागि परदेश जानुपर्ने बाध्यता, पुरुषबाट महिलामाथि हुने शोषण-अन्याय यस्ता कथात्मक गीतको मुख्य पृष्ठभूमि भएको देखिन्छ (वैद्य २०५९; तुलाधर २०७०)।

राज्यव्यवस्था परिवर्तन हुँदैमा, राजा-महाराजा फेरिँदैमा नेपालभाषाको काव्य विधामा रहेको एउटा प्रतिरोधी धार मत्थर भएन, बरु प्रखर र सशक्त भएको दृष्टान्त पाइन्छ। उल्लेखनीय कुरा, गोरखा साम्राज्यको शुरूका अधिकांश शाह राजाले नेपालभाषामा काव्य रचना गरेका थिए भने रणबहादुरले नेपालभाषामा रचेका गीतको संकलन नै प्रकाशित छ। कवि रणबहादुर गैरनेवारहरूले पनि नेपालभाषा बोल्ने मात्रै होइन, साहित्य नै रच्ने

[४] "सिलुतीर्थया म्ये" र नेपालभाषाको प्रतिरोध साहित्यबारे थप अध्ययनका लागि *सिलु म्ये र सामाजिक प्रतिरोध* (महर्जन २०७७ख) हेर्नुहोस्।

सिर्जनात्मक परम्पराबीच उदाएका थिए (तुलाधर २०१३; कायस्थ ने.सं. ११०५) । उनकै शासनकालमा नेपालभाषाको काव्य सिर्जनामा सर्वसाधारण कविको बलियो उपस्थिति देखिएको थियो । उनीहरूमध्ये कसैले सामाजिक र ऐतिहासिक विषयवस्तुका गीतिकथा, त्यसमा पनि वैदेशिक रोजगार गर्ने र तिनका परिवारजनका कथासँगै विस्थापनको शिकार भएका स्वदेशीजनका पीडा पनि लेखे ।

संयोगको कुरा, सशक्त प्रतिरोधी रचनाको उदाहरण बनेको "सितला माजु" रणबहादुरबाट व्यापक रूपमा विस्थापित उपत्यकाबासीको पीडा र प्रतिरोधको कथा हो भने "रानी विजयालक्ष्मी" चाहिँ रणबहादुरबाट हेलम्बु निर्वासित गरिएकी आफ्नै महारानी राजराजेश्वरीको कहानी हो, जसलाई रणबहादुरको हत्यापछि भीमसेन थापाले स्वदेश फिर्ता बोलाएर सती पठाएका थिए । भिन्नाभिन्नै निर्वासन पीडा दर्साइएका यी गीतिकथामा अज्ञात सर्वसाधारण कविहरूले सामाजिक जीवनका दुःख-पीडाको अभिव्यक्ति सँगसँगै अविवेकी शासकहरूको ठाडो आलोचना गरेका थिए, एउटामा रणबहादुर शाहको र अर्कोमा भीमसेन थापाको । "रानी विजयालक्ष्मी" मा रणबहादुर शाहले सत्तारुढ गरेका मुख्तियार थापाको नामै किटेर व्यंग्य र भत्सर्ना गरिएको छ—"काजी भने पनि भीमसेन थापा, मन्त्री भने पनि भीमसेन थापा, अकालमै ज्यान गुमाउनु पऱ्यो ।" "सितला माजु" मा चाहिँ राजामा धर्म नभएकाले काँचा बच्चाहरूलाई तामाकोशी पारिसम्म धपाइएको र प्रजाले अति दुःख पाएको भन्दै रणबहादुरको आलोचना गरिएको छ । यसबाट देखिन्छ, दुःख-पीडा र आलोचनाको अभिव्यक्ति आफैमा प्रतिरोधको रूप हो भने व्यंग्य र हास्यचाहिँ प्रतिरोधलाई सार्वजनिक गर्ने सशक्त माध्यम हो ।

## महामारीको निहुँमा काठमाडौँबासीको विस्थापनको इतिहास

योगेश राजका अनुसार इतिहासका विविध कालखण्डमा दरिद्र, युद्धबन्दी, अपराधी, पागल वा महारोगी कहलिएका "अक्षम" मानिसहरूको समूहलाई समाजदेखि बाहिर राख्ने प्रयास भएको पाइन्छ । त्यस्ता प्रयासमा समाजका बाँकी वर्गले आ-आफ्ना राजनीतिक र अर्थ-सामाजिक सत्ताको उपयोग गरेका हुन्थे वा गरिरहेका हुन्छन् भन्ने कुरा समाजशास्त्रको सामान्य तथ्य बनिसकेको छ (राज सन् २००७ : १४४–१४५) । महामारी हुँदा बिरामीलाई शहर र बस्तीबाट अलग्ग राखिने गरेको इतिहास जगजाहेर छ । तर रणबहादुर शाहले नेपालमा बिरामी नै नभएका बालबालिकालाई समेत सैन्यशक्तिको परिचालन मार्फत ठूलो संख्यामा विस्थापन गरिएको तथ्य कमैलाई थाहा छ ।

केही इतिहासकारको ठम्याइ छ, रणबहादुरकी प्रिय रानी कान्तवतीको मृत्यु बिफरका कारण भएको थियो र यही अवधिमा बालक गीर्वाणयुद्धलाई रोग सर्ने त्रासले उपत्यकाबाट बालबालिकालाई निष्कासन गरिएको थियो । उनलाई बिफर रोग लागेको थियो कि क्षयरोग,

इतिहासकार र अध्येताबीच मतान्तर छ । धेरै जसोको दाबी छ, उनलाई शीतला वा बिफर रोग लागेको थियो । केहीको जिकिर छ, उनी घातक क्षयरोगबाट आक्रान्त थिइन् ।[५]

त्यसै गरी, महामारी कालखण्डबारे पनि मतान्तर रहेको छ । समयबारे चित्तरञ्जन नेपाली पादटिप्पणीमा लेख्छन्, “कुनै वंशावलीमा बालक बालिकाहरूको निर्वासन सं. १८६१/६२ तिर भएको भनी लेखिएको छ” (नेपाली २०२० : ४१) । सम्भवतः तिनै वंशावली र दीनानाथ उपाध्यायलाई पठाइएको रणबहादुरको पत्रकै आधारमा बाबुराम आचार्यले १८६१ साल र १८६२ सालमा गरी दुई पटक काठमाडौँ उपत्यकाबाट बालबालिकालाई निकाला गरिएको तिथिमिति उद्घाटन गरेका थिए (आचार्य २०६९ : २०८, २०९) । यद्यपि, उनैले पहिले “गोरखा विजयकालका घटना” मा “१८६२ वैशाखः बिफर नखोपाएका राजधानीका केटाकेटी कंपनी लगाई निकाला” भनी एक पटक मात्रै निकाला गरिएको लेखेका थिए (आचार्य २०२९ : १७३) ।

हेमराज पाण्डेको संग्रहमा रहेको “नेपाल देशको इतिहास” मा उल्लेख भए अनुसार १८६० चैतमा रणबहादुर शाह काशीबाट काठमाडौँ फर्केर सत्ता हासिल गरे पछिको सालमै बिफरको महामारी फैलिएको देखिन्छ । दामोदर पाँडे काटिएको र राजराजेश्वरी हेल्मुतिर निकाला भएको घटना उल्लेख गरेपछि त्यसमा लेखिएको छ, “तिनै ताका नेपालमा शीतला रोग आउंदा श्री स्वामीज्यूले आफ्ना पुत्र गीर्वाणयुद्धविक्रम शाहलाई शीतला होला भन्ने डरले नेपालमा कुनै पनि बालक राख्न दिएनन् र धेरै प्रजाहरू पूर्व र पश्चिमतर्फ लागे” (प्राचीन नेपाल २०३० : १०) ।

ज्ञानमणि नेपालले यसलाई १८६२ सालको घटना भनेका छन् ।[६] बाहुनले खाएको बिर्ता र देवीदेवताको गुठी जग्गा हर्ने गरी “बासठ्ठीहरण” थालिएको र फागुन महिनामा

[५] बालचन्द्र शर्मा (२०३३), धर्मरत्न यमि (यमि २०५८[२०१४] : ४२), प्रेमबहादुर कसा (ने.सं. १०९३ : ७७), चित्तरञ्जन नेपाली (२०२० : ३८), महेशचन्द्र रेग्मी (सन् १९९५ : ९), हरिराम जोशी (२०७६, २०७७), मल्ल के. सुन्दर (२०४५ : ७६), तुलसीराम वैद्य र तीर्थप्रसाद मिश्र (२०५४ : ११९–१२०), गंगा कर्माचार्य-हाडा (सन् २००५ : ३००), योगेन्द्र राजकर्णिकार (ने.सं. ११३० : ११४), वज्रमुनि वज्राचार्य (२०६५) सँगै हेनरी एम्ब्रोज ओल्डफिल्ड (सन् १८८० : २८५), पर्सिभल ल्यान्डन (सन् १९२८ : ७१), मेरी स्लसर (१९८२ : १९८), जोन ह्वेल्प्टन (सन् १९८७ : ४३), सुसन हेडन (सन् २०१८) र टम रबर्टसन (२०७७) का अनुसार उनलाई शीतला वा बिफर रोग लागेको थियो । तर धनवज्र वज्राचार्य (२०१९), बाबुराम आचार्य (२०६० : २१), ज्ञानमणि नेपाल (२०५० : ४१), सुरेन्द्र केसी (२०६० : १०९), महेशराज पन्त (२०७४) र अमिशराज मुल्मी (सन् २०१७) का अनुसार उनी घातक क्षयरोगबाट आक्रान्त थिइन् ।

[६] ती दुवै वर्ष बिफर फैलिएपछि सामूहिक निष्कासन गरिएको बाबुराम आचार्यको जिकिर छ (आचार्य २०६९) ।

रणबहादुरले मुख्तियारी पद ग्रहण गरेलगत्तै नेपाल खाल्डोका बालबालिकालाई बिचल्लीमा पार्ने गरी शहरबाट निष्कासन गरिएको तथ्य ज्ञानमणिले लेखेका छन् ।

१८६२ सालमा पनि बिफरको महामारी फैलिएको तथ्य मकवानपुरको चिसापानी गढीका सुवेदारहरूलाई पठाइएको आदेशबाट आधिकारिक रूपमा पुष्टि हुन्छ । राजधानी काठमाडौँ छिर्ने र तराईदेखि विदेशसम्म जाने मूल नाकाका रूपमा रहेको चिसापानीमा झारा तिर्न गएका प्रजामा बिफर देखिएपछि चिसापानीको बाटो बन्द गर्न, व्यापारी र पैदलयात्रीमध्ये कसैलाई पनि आवतजावत गर्न नदिन र कुनै पनि हालतमा बिफर फैलिन नदिन आदेश दिइएको थियो (आरआरएस सन् १९८८ : ७४०–७४१) ।[७]

नयराज पन्तका अनुसार, १८६० सालमा काशीबाट फर्केर सिन्दूरयात्राका साथ सत्तासीन भएपछि रणबहादुरले कान्तवतीको विरह-व्यथाको झोकमा आफूले बिगारेका मन्दिरको जीर्णोद्धार गराए भने "बिफर आएका र नखोपाइएका केटाकेटीलाई शहरबाट बाहिर पुऱ्याउने प्रबन्ध" पनि गरे (पन्त २०१९ : ४६) ।

यस्तो अधर्म वा अमानवीयताको सीमा नाघ्ने व्यवहारको नेपथ्यमा रोग, महामारी, र मृत्युले रन्थनिएका शासकको राज्य-प्रेरित हिंसाको शृंखला पाइन्छ । माघ १, १८३१ मा ५२ वर्षमा सम्भवतः बिफरका कारण[८] पृथ्वीनारायणको मृत्युपछि २३ वर्षका उनका छोरा प्रतापसिंह सत्तासीन भएका थिए । उनी तीन वर्ष पनि शासन गर्न नपाउँदै १८३४ मंसिरमा बिफरबाटै मरेपछि अढाई वर्षका उनका छोरा रणबहादुरलाई राजा बनाइयो ।[९] रणबहादुर १० वर्षको हुँदा क्षयरोगले उनकी आमा नायब राजेन्द्रलक्ष्मीको मृत्यु भयो । त्यसपछि उनका काका बहादुर शाहले नायबी चलाए भने १९ वर्षको उमेरमा रणबहादुरले नै सत्ता चलाउन थाले । आफूले मन पराएकी तिरहुतकी मैथिल ब्राह्मणीसँग उनले १८५२ सालमा बिहे गरेपछि दरबारिया राजनीतिमा उथलपुथल नै भयो, जसबाट रैती पनि प्रताडित भए । दरबारमा अन्तरजातीय बिहेबारे मात्रै होइन, बिहेपछि जन्मिने छोराको राजकीय हैसियतबारे द्वन्द्व शुरू भयो ।

असोज १९, १८५४ मा रणबहादुरकी तेस्री ब्याइते पत्नी कान्तवती (कान्तिवती वा कान्तिमती पनि लेखिएको पाइन्छ) मिश्रबाट गीर्वाणयुद्ध जन्मिए । त्यसको वर्षदिन नहुँदै कान्तवती रोगग्रस्त भइन्, जसले दरबारलाई नै बिरामी बनाइदियो । कान्तवतीको उपचार र गीर्वाणयुद्धको सिंहासनका लागि रणबहादुरले दमन र हिंसाको नयाँ चक्र चलाए ।

[७] यसबारे थप अध्ययनका लागि परिशिष्ट ग हेर्नुहोस् ।

[८] मर्ने बेलामा जीउभरि खटिरा पाकेको वर्णन पाइएकोले पृथ्वीनारायणको मृत्यु बिफरले वा कुनै खटिराले भएको भन्न सकिने भनाइ ज्ञानमणि नेपालको छ (नेपाल २०५० : १७) ।

[९] बिफरबाट होइन, रगतमासीको बिमारीले गर्दा प्रतापसिंहको देहान्त भएको बाबुराम आचार्यको दाबी छ (आचार्य २०७० : २०९) ।

बिहेको विरोध गर्ने र गीर्वाणयुद्धलाई सिंहासन सुम्पने धर्मपुत्रमा सही नगर्ने दरबारिया निर्वासित गरिए, कसैका आँखा फोडिए (नेपाल २०५० : ४३) । कात्तिक १९, १८५६ मा कान्तवतीको देहान्तबाट आहत भएका "स्वामी महाराज" ले धार्मिक र साँस्कृतिक दलन र हिंसाको अर्को शृंखला चलाए । "मन्दिरमा पूजापाठ र शान्तिस्वस्ति गराउने कार्यमा लागेका ब्राह्मणका नाककान काटिए, कुकुर आदिको मासु खुवाई उनीहरूको जात खसाइयो, भगवतीको मन्दिर ध्वस्त पारी माटोमा मिलाइयो, अन्य देवीदेवताको मूर्ति भत्काउन सिपाही खटाइए..." (वैद्य र मिश्र २०५४ : ११९) । उनी पशुपति नै फोर्छु भन्दै तोप अघि लगाएर पनि हिँडे । उनले तुलजादेवीको मूर्ति उखेलेर मसानमा फाल्न लगाए । भक्तपुरको बेताललाई बञ्चरोले फोडेर फोहोरमा हाल्न लगाए । सिम्भु (स्वयम्भु) की हारती मातालाई गुहुको धूप सुँघाउँदै फाल्न लगाए । कुम्भेश्वरको शिवलिंगमा पनि गुहुकै लेप लगाई पूजा बन्द गराए (नेपाल २०५० : ४६; आचार्य २०६९ : २७) ।

यस बीचमा दरबारमा शुरू भएको द्वन्द्वले हिंसात्मक गृहयुद्धको रूप लिएपछि रैती पनि घुनजस्तै पिसिए । यही द्वन्द्वपछि जेठ ५, १८५७ मा रातारात काशी (बनारस) भागेका स्वामी महाराज १८६० सालमा काठमाडौँ फर्केर सत्ताको अभ्यासमा लिप्त भए । १८६२ मा बालक राजा गीर्वाणयुद्धबाट "मुख्तियार" (प्रधानमन्त्री) पद लिनुअघि र पछि उनले बालक राजा गीर्वाणयुद्धलाई बिफर रोग सर्ने बहानामा नेपाल खाल्डोका नखोपाएका सबै बालबालिकालाई उपत्यकाबाट निष्कासन गरे ।

## विस्थापनको गीतिकथा

स्वामी महाराज मुख्तियार भई राजकाज चलाउने क्रममा जुन सामूहिक विस्थापन गरियो, त्यसको कथाव्यथालाई नेपालभाषाका अज्ञात साहित्यकारले गीतमा रूपान्तरण गरेका थिए । रैती र प्रजाका पालक मानिने राजाबाटै विस्थापित भएपछि नेपाल खाल्डोका जनताले राजालाई होइन, बिफरकी माता ठानिने सितला माजुलाई गुहार्दै गीतिकथा लेखेको देखिन्छ । शासकबाट भएको विस्थापन र प्रजाको पीडालाई प्रकाशमा ल्याउने ऐतिहासिक गीतिकथा "सितला माजु" ले प्रजापालक राजाप्रति जनताको अविश्वास र लाञ्छनाको कथा पनि कहन्छ :

सितला माजु स्वहुने परजाया गथिन हवाल
(शीतलामाई हेरी देऊ प्रजाको हवाल)

बिफर पूरै उन्मूलन नहुँदासम्म नेपाली समाजमा सितला माजु बिफर फैलाउने र निको पार्ने माजु (माता) को रूपमा पुजिन्थ्यो । नेवाः समाजमा हारती माताका रूपमा पनि पुजिने

सितला माजुलाई यस रचनामा मूल आराध्य माता मानिएको छ (वज्राचार्य २०६५) । यस गीतिकथामा सितला माजुसँगै कछला र बछला माजुलाई पुकारिएको छ । यस गीतिकथामा महाराजको हुकुम नै समस्याको कारकतत्त्व हुनाले पीडितजनले सितला माजुलाई बेहालबाट मुक्तिका लागि पटक-पटक अर्चना गर्छन् । शुरूमै सितला माजुलाई प्रजाको कस्तो बेहाल भयो हेर्नू न भनी आग्रह गर्दै महाराजको हुकुमको बयान गरिन्छ :

कहिले नसुनेको, कहिले नदेखेको
काँचो बालक राख्ने होइन—
महाराजको हुकुम भयो ।

महाराजले हुकुम दिन्छन् : "कचिमचा" (बिफर नलागेका बच्चा) लाई घरमा मात्रै होइन, देशमा नै राख्न पाइँदैन ।[१०] महाराजको हुकुमबारे कविको टिप्पणी हुन्छ, यो त कहिल्यै नसुनिएको, कहिल्यै नदेखिएको उर्दी हो । इतिहासमा कहिल्यै जारी नभएको उर्दी निकै कडा ढंगले लागू गरिएको थियो ।

झ्याली पिट्दै, बाजा बजाउँदै
सिपाहीले घेर्न लगाए
काँचो बालक निकाली पठाए ।

प्रजाविरुद्ध सेना प्रयोग गर्दै महाराजले खासमा दमनकारी अभियान चलाएका थिए । त्यसरी सैनिक दमनमा परेका प्रजा मूलतः नेपाल खाल्डोका आदिवासी नेवाः समुदायका थिए (जोशी २०७६) । सितला माजुको गीतकै एउटा संस्करणमा "गोरखा देशबाट आएर नेपाल राज्यका राजा" भएका भन्दै नयाँ शक्ति-सम्बन्धतिर इंगित गर्न खोजिएको पाइन्छ । यो पक्ष प्रचलित "सितला माजु" मा भने छैन ।

गोरखा राजालाई बिन्ती गर्छु
कस्तो सजाय तिमीले दियौ
गोरखा देशबाट आएर

[१०] "देश" शब्दले कहीँ राज्यले चर्चेको सम्पूर्ण भूभागलाई जनाउँथ्यो, कहीँ राजधानीभन्दा तल्लो किसिमका बस्तीपुर र शहरलाई मात्रै पनि जनाउँथ्यो (रेग्मी २०३६ : १०१) । नेवाः समुदायमा बोलीचालीमा पनि येँ दे, किपू दे भन्ने चलन अझै बाँकी छ, जसले एकसाथ कुनै जमानाको देश र बस्तीको अर्थ जनाउँछ ।

नेपाल राज्यका राजा भएका
क्षत्रपति श्री रणबहादुर तिम्रा कारणले
जनताले दुःख पाए ।[११]

देशनिकालामा परेका काँचा बालकहरू र तिनका अभिभावकको हालत सितला माजुलाई सुनाउने क्रममा अत्यन्त मार्मिक कथा भनिन्छ :

खाने चिउरा काखी च्यापी
काँचो बालक पीठ बोकी
जानुपऱ्यो तामाकोशी पारि ।

सम्भवतः यो काँचो बच्चाको बुबाको दुरवस्थाको चित्रण हो । आमाको बेहालको प्रस्तुति झनै दर्दनाक छ :

एउटा बालक पीठ बोकी
एउटा बालक काखी च्यापी
अर्को चाहिँ घिसारी लग्यौ ।

काठमाडौँ उपत्यकादेखि तामाकोशीसम्मको पाँच/छ दिन हिँडाइको बाटोमा उनीहरूले अति नै दुःख-कष्ट र वियोग व्यहोर्नु पऱ्यो । धार्मिक, सामाजिक र ऐतिहासिक सन्दर्भसँग जोडिएका "बाखं म्ये" मा नायक-नायिका पुगेका ठाउँ र त्यहाँका मठमन्दिरको नाउँ उल्लेख गर्ने चलन छ । यसमा पनि काँचा बच्चा सहित निष्कासित अभिभावकहरू काठमाडौँबाट हिँडेर "ख्वप" (भादगाउँ/भक्तपुर) मा बास बस्न पुग्छन् र त्यहाँ तलेजु माजुको दर्शन गर्न जान्छन् । त्यहाँबाट बनेपामा बास र चण्डेश्वरी दर्शन, पलाञ्चोकमा बास र भगवतीको दर्शन, दोलालघाटमा बास र भीमसेनको दर्शन गर्दै तामाकोशी वारि बस्न पुग्छन् । तामाकोशी पारिसम्म जानुपर्ने चिन्ताले उनीहरूलाई सताएको देखिन्छ । उनीहरू दोलखामा बास बस्दै तामाकोशी पारि पुगेर महादेवको दर्शन गर्न पुग्छन् ।

बिफर दिने कछलामाई
पानी भर्ने शीतलामाई
लैजाने बछलासँग माग्छु ।

[११] सुनील उलकले नेपाली भाषामा गरेको अनुवादका लागि हेर्नुहोस् (श्रेष्ठ २०७७) ।

यस बीचका मुख्य-मुख्य ठाउँका देवीदेवताको दर्शन गर्दै उनीहरू हुकुमको तामेली गर्छन् । अनेक देवीदेवताको दर्शनसँगै खटिरा निकाल्ने कछला माजु, खटिरामा पानी भर्ने सितला माजु र बिरामीको रोग हर्ने बछला माजुको आराधना पनि गर्न छुटाउँदैनन् । तर ती दर्शन र आराधनाबाट पनि कुनै प्रतिफल प्राप्त हुँदैन । बरु, राजाको हुकुम पालना गर्दै अगाडि जाँदा निष्कासित प्रजाको बेहाल भने बढ्दै जान्छ ।

खानलाई चिउरा[१२] छैन
लगाउन लुगा छैन
बस्नलाई बास कतै छैन ।

यति दीनहीन मानिसहरूलाई पनि सिपाहीहरूले घेरा हाल्दै, सिस्नुको मुठाले पिट्दै, पशुलाई जस्तै धपाउँदै लगिएको देखिन्छ ।

डोरीले होइन, लठ्ठीले होइन
सिस्नुले पिटीपिटीकन
सिपाहीले घेरा दिइल्याए ।

राज्यको दमनकारी अनुहार देखेपछि पीडितहरू माताहरूलाई गुहार्छन् र बालबालिकाको रक्षाको वर माग्दै अगाडि बढ्छन् । बच्चाहरूलाई मात्रै केही नहुने हो भने एक जोडी परेवा तथा सुनचाँदीको “द्वाफोस्वां” (कुन्दफूल) चढाउने भाका गर्छन् । तर माताहरूसँग गरिएको अनुरोध र भाकलको केही अर्थ लाग्दैन । अनुरोध र भाकलभन्दा बलिया हुन्छन् उनीहरूले व्यहोर्नु परेको नारकीय परिस्थिति र दारुण जीवन ।

घाम नझुल्किने ठाउँ सेपिलो
बालक मरिहाल्यो चिसो लागेर
आमाबाबु छाती पिटीपिटी रोए ।

[१२] मूल गीतिकथामा “नसा” शब्द प्रयोग गरिएको छ, जसको अर्थ खाना वा खाद्य पदार्थ भन्ने लाग्छ ।

रणबहादुरले चलाएको दमनकारी राज्य जति चिसो थियो, त्योभन्दा कम चिसो थिएन मौसम र वातावरण। पहाडै पहाडमा रातदिनको यात्रा, सेनाको शासन, खानपिनको अभाव र कठ्यांग्रिने चिसोको प्रभावले बालक बिमारी र मृत्युको शिकार भयो।[१३]

पाइँदैन बालक मरेको जलाउन
पाइँदैन खाडलमा पनि पुर्न
प्रजाको कस्तो हवाल।

आफ्नै रगत-मासुको अंशको मृत्युको दुःख एकतिर छँदै छ, अर्कोतिर बच्चाको लास जलाउन पनि नपाइने, खाडल खनी गाड्न पनि नपाइने उर्दी छँदै छ। यहाँ अज्ञात कविले प्रजाको कस्तो बेहाल भयो भन्दै दुरवस्थाको गहिराइतिर लैजान खोज्छन् :

आधा बालक आमाले लिई
आधा चाहिँ बाबुले समाई
तामाकोशीमा खसाल्न पर्‍यो।

निर्दयी र असंवेदनशील राजाज्ञाले गर्दा उनीहरूले छोराको सद्गत समेत गर्न पाएनन्। गीतिकथाको मुटु नै कटक्क खाने "क्लाइमेक्स" मा पुगेपछि पीडित जनको दुःख र आक्रोशले भरिएका शब्दमा अज्ञात कवि आलोचनात्मक तेवरका साथ लेख्छन् :

स्वामि जुजुया धर्म मदया कचिमचा वाके छोत
वने माल तामाखुसि पारि

"स्वामी महाराज" को रूपमा इतिहासमा दर्ज भएका राजाको मनमा "धर्म" वा "विवेक" नहुनाले उपत्यकाका प्रजा र काँचा बच्चालाई तामाकोशी पारिसम्म मिल्काउन पठाइयो। त्यसरी धपिएका बालबालिका मृत्युको मुखमा पुगेपछि नदीमा फ्याँकिने वस्तुमा फेरिए। त्यस्ता बालबालिका बिफरका कारण कति मरे, कति अन्य रोगसँगै भोकतिर्खा र बेवास्ताले मरे, कति नदीमा फ्याँकिए, कतिको सद्गत भयो, कुनै हिसाब छैन।

[१३] बाबुराम आचार्यले १८६१ जेठमा र १८६२ वैशाखमा बिफर नखोपाएका बालबालिकालाई नेपाल खाल्डोबाट धपाइएको तथ्य उल्लेख गरेका छन् (आचार्य २०६९)।

नेपालका छत्रपति श्री रणबहादुर
प्रजाले अति दुःख पाए

यसका पात्रहरूको मात्रै दुःख हेर्दा एक जिउँदोजाग्दो बालकलाई कठ्यांग्रिदो मृत्युको नदीमा फ्याँक्ने काम छत्रपति वा महाराजबाट भएको छ । ती बालक बिफरका कारण मरेका थिएनन्, बरु राज्यका अमानवीय नीति र हिंस्रक व्यवहारले मरेका थिए । हुकुमको ओखती नहुँदा दुःख-पीडा र सन्तान वियोगको विपत्ति भोगेका प्रजाले आफ्नो बेहाल देखाएर सितला माजुलाई गुहार्छन् र पीडित लोकको उद्धारका लागि पुकारा गर्छन् ।

शीतलामाई दुःख नदेऊ
सहस्र मेरो बिन्ती
गरिदेऊ लोकको उद्धार ।

सामन्ती समाजमा राजालाई अभिभावक मानिन्छ, प्रजाका कुनै दुःख-कष्ट हर्ने संस्थाको रूपमा राजतन्त्रलाई स्थापित गरिएको ठानिन्छ । तर जब राजा र राजतन्त्र नै प्रजाको समस्याको मुहान बनिदिन्छन्, तब समाधान र गुहारका लागि लौकिक व्यक्ति, शक्ति र संस्था जनतासामु अनुपस्थित हुन्छन् नै । जब राजाले नै आफ्ना प्रजाका बालबालिकालाई निष्कासन गरेरै भए पनि स्वजनको मात्रै जीउज्यानको सुरक्षा खोज्छन्, त्यतिखेर धर्ममा आस्था राख्ने प्रजाले अलौकिक शक्तिको पूजा वा पुकारा गर्नु अस्वाभाविक हुँदैन । तर यस रचनामा लौकिक समस्याको अलौकिक समाधानले पीडित जनमा मानसिक शान्ति बाहेक अरू उपाय र उपचार दिएको देखिएन । जनकलाल वैद्यका अनुसार, प्रजाजनलाई यति हद सम्मको अमानवीय सासना र संकट अब कुनै पनि राजाको निर्विवेक र आवेशपूर्ण व्यवहारका कारण नदोहोरियोस् भन्ने विचारका साथ मानवीयता र विवेक जगाउने उद्देश्यले सिर्जना गरिएको "सितला माजु" गीतिकथाको सामयिक महत्त्व छ (वैद्य २०५९ : १६८) ।

## पीडितका नजरमा निष्कासन र घरफिर्ता

"सितला माजुया म्ये" मा लुकेको इतिहासलाई थप पुष्टि गर्ने अरू पनि लोक साहित्यिक स्रोत छन्, जसको सबैभन्दा प्रामाणिक दस्तावेज हो—पाटनका पण्डित एवं कवि-लेखक सुन्दरानन्द बाँडा (शाक्य) ले १८८० सालतिर लेखेको "त्रिरत्न सौन्दर्यगाथा" (वज्राचार्य २०१९) । १८५४ सालमा जन्मिएका गीर्वाणयुद्धविक्रमभन्दा पाँच वर्ष जेठा मानिने बाँडाका अनुसार पूर्वतिर तामाकोशीतिर मात्रै होइन, दक्षिणतिर तराईको चारकोसे झाडीसम्म र उत्तरतिर साँखुभन्दा माथिको मणिचुड नजिकसम्म पनि नाबालकहरू र उनीहरूका

अभिभावकलाई निर्वासित गरिएको थियो । उनीहरूमध्ये कैयौँ त उपत्यकामा फर्कनै नपाएको, फर्कन पाएकाले पनि कैयौँले गीर्वाणयुद्धविक्रमको अनुहार हेर्न नपाएको र कैयौँले एकैचोटि रणबहादुरका नाति र गीर्वाणयुद्धविक्रमका छोरा राजेन्द्रविक्रम शाहको मुहार मात्रै देख्न पाएको बयान “त्रिरत्न सौन्दर्यगाथा” मा गरिएको छ ।

भीमसेन थापा मुख्तियार रहेकै बेला मंसिर २४, १८७० मा जन्मिएका राजेन्द्रविक्रम तीन वर्षको हुँदा राजा बनाइएका थिए भने १० वर्षको हुँदा साम्राज्यलक्ष्मी र राज्यलक्ष्मीसँग उनको विवाह गरिएको थियो । सुन्दरानन्द बाँडाले त्यही विवाहउत्सव र राजाको दर्शन गर्न आएका पञ्चभलाद्मीमध्ये केहीले राजा-महाराजा देखेको दृश्यको बयान उनीहरूकै मुखबाट गर्न लगाएका थिए । बाँडाले उनीहरूलाई “आज साक्षात् नारायण परं ब्रह्म श्री ५ मन्महाराजाको दर्शन पायाथ्यौ भनि सोध्दा” तिनीहरूमध्ये ८० वर्ष नाघेका बुढाहरूले तीन शहर नेपाललाई काबुमा लिने “श्री ५ मत्पृथ्वीनारायण साह देवको पनि दर्शन पाएको त कसैले बाबाको औंला समाती श्री ५ मत्सिंहप्रताप (प्रतापसिंह) साह महाराजा” को समेत दर्शन पाएको बखान गर्छन् । उनीहरू राजेन्द्रविक्रम तेज, उमेर, अनुहार र पोसाकले पृथ्वीनारायणदेखि प्रतापसिंहजस्तै (एकै) देखिएको प्रशंसाको पुल बाँध्छन् (वज्राचार्य २०१९ : २१७–२१८) । यसै क्रममा एक जनाले भने बिफरका कारण विस्थापित हुनुपर्दा पृथ्वीनारायणका पनाति, प्रतापसिंहका नाति र राजेन्द्रविक्रमका पिता गीर्वाणयुद्धविक्रम शाहको समेत दर्शन नपाएको आत्मकथन पेस गर्छन् । उनको भनाइ प्रस्तुत गर्नुअघि बाँडा संस्कृत भाषामा श्लोक हाल्छन् :

> नैवाऽपश्यं हि गीर्वाणयुधनृपमहं शीतलायाः प्रतीपा–
> दाबालं ताम्रकोशीगहनमुपगतो भ्रातृवर्गेण साकम् ।
> श्रुत्वा यत्कीर्तिमारादहह धृतिहरो निन्दमानोऽस्मि भाग्यं
> दिष्ट्या पश्यामि तत्सूनुममुमवनिपं राजराजेन्द्रसाहम् ॥२४२॥ (वज्राचार्य २०१९ : २१८)

त्यसपछि एक प्रजाले आफ्नो दुःखपीडा पोख्छन् :

> हे भाइहरूहो मैले ता श्रीमहाराजा गीर्वाणयुद्धविक्रम साहको दर्शन पायेनथ्यां क्याहा भनौला मेरा अभाग्यले ३ वर्षका बालख मलाई शीतला पर्दा घरमा राषनु नहुँदा शीतला नपर्‍याका काँचा भाई बहिनी समेत पूर्व दिशाका तामाकोशीपार दुर्ग वनमा हुकुमले पुर्‍याया र ताम्रकोशीका जलले शीतलाका अभिषेक दिंदा चाँडै मलाई निको भयो. ताहाँपछि भाइलाई पर्‍यो. तसको विशेष नहुदैमा भगिनीलाई

पऱ्यो. तेस्तै हुँदा केहि वर्ष बित्यो. सबै भाइ बहिनीलाई शीतला छुटि गयापछि आमाबाबुको शोक पऱ्यो. चेत सत्त्व पनि हरायो. एस्तै विपदा पर्दा भाग्यकन धिक्कार गरि दुःख पाई रह्या. कदाचित कुलका व्यवहारले घर आउदा ता श्रीमहाराजाको दर्शन पायेनछु. भाग्यले श्री ५ मन्महाराजा राजेन्द्रविक्रम साह देवको दर्शन गऱ्यां. छोरा छोरी भन्या वहि नै छन्. लिनुजानुपर्न्या छ भनि भन्या ॥२४२॥ (वज्राचार्य २०१९ : २१८)

यसरी बाँडाले सामूहिक निष्कासनमा परेकामध्ये एक परिवारकै कथा-व्यथा भनेका छन् जो तीन वर्षको बाल्यावस्थामा बिफर आउँदा तामाकोशीसम्म लखेटिएका थिए । भाइबहिनी समेत बिफरको महामारीमा परेका र आमाबुबाको मृत्यु समेत व्यहोरेका उक्त व्यक्तिले विपदको फेहरिस्तै राख्छन् । कुलको व्यवहार गर्न मात्रै नेपालखाल्डोमा फर्केका उक्त व्यक्तिलाई त्यहीँ छाडिएका छोराछोरी लिन फर्केर जानु छ । उनीहरू १८६२ सालमा नै निष्कासनमा परेको र १८८० सालमा राजेन्द्रविक्रमको विवाहको बेला मात्रै फर्कन पाएको अनुमान गर्न सकिन्छ । यसको अर्थ हो उनको निर्वासनको अवधि करिब १८ वर्षको भइसकेको देखिन्छ । तीन वर्षको बालक रोग र शोकसँग जुइदै युवाको रूपमा हुर्कने क्रममा आफ्ना पनि छोराछोरी भइसकेपछि उसलाई बल्लतल्ल फर्कने मेलोमेसो मिल्दैछ । सामूहिक विस्थापनमा परेका अर्को पात्रको कथा लेख्दै बाँडा थप्छन् :

धन्याऽरण्यान्यगम्या ठिगणसमभिधा वेत्रवल्लीविताना
यत्रासन् शीतलार्ताः शतश अतितरां शीतलाल्हादितायाम् ।
प्रत्यावृत्याहमस्याः स च स त ससखः स्वस्ति गीर्वाणयुद्धं
दिष्ट्या पश्यामि दीनाननु जनितकृपं द्रव्यवृष्ट्यारमन्तम् ॥२४३॥ (वज्राचार्य २०१९: २१८)

फेर कोहि भंन लाग्या. धन्य मेरा भाग्य रामसिंह्या खवासले मेरा महतारीलाई सिस्नाकन देषाउँदा आमाबाबु समेत मलाई कांचाका निमित्त ठिगण भन्याको दक्षिण दिशामा महादुर्ग वनमा पुऱ्यायो. कस्ता ठिगण भन्या बेतका बोटले र लहराले बाकलो गरि छोपेर छाना बनायाका घरभन्दा अतिबलियो चन्द्र सूर्यका छाया पनि नपर्न्या हुनाले अतिशीतल ठाउँ हुनाले गुफा जस्तो हजारन् आद्मी बस्नुहुन्या जहाँ शीतलाले पीऱ्याका आद्मीहरू हजारन थिया. सुसार गर्नानिमित्त हजारन् आदमी जागर्त गरि बस्याका हुनाले बाघ भालु इत्यादि दुष्ट जन्तुका भय पनि नहुन्या चित्तका आल्हाद शीतल जगा हुनाले चाडै निको भयौं र अमुकसित

मीत लगाइ अमुका अमुकाका साथमा फर्केर आउँदा शहरमा डुलन जाँदामा श्री ५ मन्महाराजा गीर्वाणयुद्धविक्रम साह महाराजाकन हातिमा भीमसेन काजीसित सवारि हुँदा दर्शन पायां. धेरै रूपैयाँ मोहोर पैसा छरिदिनुहुँदा मैले प्रशस्त रूपैयाँ टिप्याँ. ती रूपैयाँले पुष्टकारी गुटिका वैद्यसँग माग्यां. तेति रूपैयाँले पुष्ट पनि भयां. गुजारान पनि गर्यां ॥२४३॥ (वज्राचार्य २०१९ : २१८–२१९)

यसको अर्थ हो—पूर्वमा तामाकोशी पारिसम्म मात्रै होइन, दक्षिणमा चारकोसे झाडी भएको इलाकासम्म र उत्तरमा मणिचुड पहाड निकटसम्म पनि बालबालिका र उनीहरूका अभिभावकलाई निर्वासित गरिएको थियो। तामाकोशी पारिसम्म निष्कासनको गीत गाइएको "सितला माजुया म्ये" मा भन्दा बेसी पक्ष "त्रिरत्न सौन्दर्यगाथा" मा खुलाइएको छ, जसमा चारै दिशातिर निष्कासन गरिएको तथ्य उद्घाटन गरिएको छ। राजा राजेन्द्रको पालामा लेखिएको "त्रिरत्न सौन्दर्यगाथा" मा बाँडाले "सँक्व" (साँखु) बाट पर मणिचुड पर्वतको गुफामा लुक्न गएका बालबालिका र बहुला भएका उनीहरूका आमाबाबुको कथा पनि उल्लेख गरेका थिए।

स्वस्तिश्रीमणिचूडपर्वतगुहामाश्रित्य कृच्छ्रादहं
जीवन भग्नजनितृमातृसहजैरुन्मुक्तजीवातुकः।
योगिन्या अनिशं च सेवनवशात्तत्पूजकेनैव य-
न्नैवेद्यं मम दीयते प्रतिदिनं नेतेनैव जीवाम्यहम् ॥२४४॥

कोहि भन्न लाग्या. म ता चण्डवीर केटाले काचा धपाउदा साँषुमा पनि बस्न नदिंदा मणिचूडपर्वतमा गुफामा लुकिरहंदा हामि दुई जना भाईलाई एकै दिन ज्वरले समात्ता बिफर निस्क्यो. तहाँपछि आमाबाबुलाई वायुका दोष लागेर दुवै जना बहुला भया. हामी दुई भाईकन शीतलाको रगत मासि लाग्यो र प्राणांत भया. बहुलायाकाले क्याको सुसार गर्नन्. हामिले बहुलायाकालाई क्या उपाय गरौं. महाकृच्छ्र हुँदा महा–उदास चित्तले श्रीवज्रयोगिनी माइका चरणको भजन गर्न बलैले गयाँ. तहाँ पूजारी बाडाले करुणा राषीकन दियाका ज्या केही यत् किञ्चित् नैवेद्यले निर्वाह गरि संतोष पायां. श्रीवज्रयोगिनीका प्रसादले हामी दुई जना बाँच्या. आमाबाबुलाई निको तुल्याउन सकेनं. अद्यापि बहुलायाकै छन् भनि भन्या ॥२४४॥ (वज्राचार्य २०१९ : २१९)

अर्को शब्दमा भन्दा, विस्थापनसँगै रोग, भोक, शोकविरुद्ध सिंगो जीवन भिड्न बाध्य भएका उपत्यकाबासीका कथा-व्यथाको जीवन्त दस्तावेज पनि हो—"त्रिरत्न सौन्दर्यगाथा।" भीमसेन थापा, ललित त्रिपुरसुन्दरी र राजेन्द्रविक्रम शाहको प्रशस्ति गाउन लेखिएको भए तापनि यस किताबका केही काला अक्षरमा, केही काला अक्षरका बीचको सेतो खाली ठाउँमा सुन्दरानन्द बाँडाले जनजीवनको पीडालाई प्रामाणिक रूपमा पेस गरेका छन्। त्यस्तो रचना कमै पाइन्छ।

१८६१/६२ सालको महामारीमा नेपाल खाल्डोबाट विस्थापित गरिएका जनतालाई फर्कन र बसोबास गर्न दिइएको तथ्य पनि यहाँ उल्लेखनीय छ। "नेपाल देशको इतिहास" मा १८६२ सालमा "बासट्ठीहरण" र १८६३ वैशाखमा रणबहादुरको हत्यापछि भएको नरसंहारसँगै भीमसेन थापाको सत्तारोहणको प्रसंग लेखेपछि भनिएको छ, "यसपछि काजी भीमसेन थापालाई श्री ५ महाराज गीर्वाणयुद्धविक्रम शाहबाट बुबाज्यूबाट बक्सेको सबै कुरा थामी भरमुलुक जंगी निजामती गैह्रको मुखत्यारी दिए। यी महाराजका राज्यकालमा अघि बुबाज्यूका पालामा धपाएका बालकहरूलाई फेरि बोलाई आफ्ना घरमा बस्न दिए" (प्राचीन नेपाल २०३० : ११)। वैद्य र मिश्रले पनि "पछि भीमसेन थापाले ती धपाइएका परिवारहरूलाई काठमाडौँ फर्कने स्वीकृति" दिएको उल्लेख गरेका छन् (वैद्य र मिश्र २०५४ : १२०)। तर धपाइएकाहरू कति फर्के, कति फर्केनन्, कति मरे, कति बाँचे, तिनीहरूको अवस्था कस्तो भयो, शासकहरूको व्यवहारमा के फेरबदल आयो, कतै पनि प्रस्ट उल्लेख छैन।

यसै क्रममा १८७३ सालमा बिफर फैलिएर नेपाल खाल्डोमा महामारीको रूप लिएपछि आम जनता त व्यापक शिकार भए नै, रणबहादुर शाह र भीमसेन थापाले जनतामाथि ज्यादती गर्दै बचाएका राजा गीर्वाणयुद्ध समेत बच्न सकेनन्।[१४] त्यस बेला पनि उपत्यकाबाट सामूहिक विस्थापन दोहोऱ्याइएको थियो कि थिएन, कुनै साहित्यमा भेटिएको छैन। जनतामाथि कहर बर्सिरहेको बेला मुख्तियार भीमसेन थापा गीर्वाणयुद्धको रक्षाका लागि खटिने क्रममा उनीसँगै चंगा उडाउँदै बसेको तथ्य भेटिएको छ—"शीतलाका

[१४] "दैवसंयोगले शीतलादेवी बाह्र वर्षसंम अपमान गरेका रिसले नेपालखाल्डाभित्र प्रवेश भइन्। अनि असंख्य बालकहरू मरी दाहादि गर्न मनाही हुँदा वागमती, विष्णुमती, प्रभावती आदि नेपालमा नदीनाला सबै रक्तमांसमय भए। त्यसकारण दुर्गन्ध बढ्दा त्यहाँ कसैले स्नान गरेनन्, जलको स्वाद पनि बिग्र्यो। गाडेको मुर्दा उठाई रक्तमांस खाने गिद्धहरू पनि अपच भई मरे। खोपेका असी नब्बे वर्ष भएका बूढाबूढीहरू पनि फेरि बिफर आई मरे। त्यस्तो भए तापनि अकस्मात् ठूलो बर्साद हुंदा बाढीले सब मुर्दा बगाउँदा सुग्घर भयो। यसै बखतमा दरवारभित्र पनि शीतला प्रवेश हुँदा श्री ५ महाराजा गीर्वाणयुद्ध विक्रम शाह पनि त्यसै बेथाले १८ वर्ष राज्यको भोग गरी १८७३ मार्ग ७ मा मृत्यु भयो" (प्राचीन नेपाल २०३० : १)।

उपसर्ग बिफरकन दुनियाँमा लाग्दा काही पनि सवारि पाउ नलागीकन अंतःपुर सकरैमात्र राज गरिकन राजकाजको भारकन भित्रैभित्र अंतःपुरमा पुऱ्याउंदा भया" (वज्राचार्य २०१९ : १९८) । "आफ्ना औरस पुत्र श्री ५ मत् राजेन्द्रविक्रम साह युवराजकन श्रीस्वामि राजाले आफुलाई बक्स्या जस्तो गरि तनै जनरल काजी भीमसेन थापाका आदरभावमा बक्सीकन आफु शीतलाका अपचारले देवराज इन्द्रकन जितुंला र शीतोष्ण सुख दुःखले रहित भयाका अद्वैत पद मोक्षकन पाउ भन्ना मनसुव गरि स्वर्ग हुन गया" (वज्राचार्य २०१९ : २००) ।

यसरी जसको जीउज्यान रक्षाका लागि एक दशकअघि हजारौं हजार जनताको विस्थापन गरिएको थियो, अनेक यातना र दमन गरिएको थियो, उनै महाराजको देहान्त १९ वर्षको उमेरमा बिफरकै कारण भयो । यो ऐतिहासिक रचना तिनै बालक महाराजलाई बचाउन गरिएको दमन र हिंसाको गीतिकथा हो, जसमा राजा र राज्यबाट आशा-भरोसाको सट्टा अमानवीय आदेश थोपरिएपछि बिफरकी देवीहरूलाई हारगुहार गरिएको छ ।

## प्रतिरोधको विश्लेषण

रणबहादुरको सनकीपनको कारण उपत्यकाबासी विस्थापित हुनु परेको कुरालाई कसैले गौण रूपमा त कसैले महत्त्व र सहानुभूतिका साथ उल्लेख गरेका छन् । बाबुराम आचार्यले यो ऐतिहासिक घटनालाई महत्त्वका साथ प्रकाशमा ल्याएको देखिँदैन । आचार्यले *जनरल भीमसेन थापा : यिनको उत्थान र पतन* पुस्तकको "परिशिष्ट" मा मात्रै एकाध शब्द खर्चेका थिए । उनले एक बुँदामा लेखेका थिए, "बालक राजा गीर्वाणयुद्धविक्रम शाहलाई बिफर सर्दछ भन्ने डरले बिफर नखोपाएका उपत्यकाभित्रका सबै बालबालिकाहरू काठमाडौँ उपत्यकाबाट बाहिर निकाला गरिए । बालक राजा गीर्वाणयुद्धविक्रम शाह मात्र यहाँ राखिए :– वि.सं. १८६१ ज्येष्ठशुक्ल–त्रयोदशी, रोज ४: जेठ ९ गते, तदअनुसार २० जुन इ.सं. १८०४" (आचार्य २०६९ : २०८) । अर्को बुँदामा लेखेका थिए, "बिफर नखोपाइएका बाल-बालिकाहरू फेरि पनि काठमाडौँ उपत्यकाबाट बाहिर निकाला गरिए :– वि.सं. १८६२ को वैशाख, तदनुसार अप्रिल/मे इ.सं. १८०५" (आचार्य २०६९ : २०९) । भीमसेन थापा स्वामी महाराजको नेतृत्वमा रहेको गोरखा दरबारको हर्ताकर्ता भइसकेको बेला घटित घटनालाई थापा सम्बन्धी किताबको परिशिष्टमा मात्रै समेटिएको देखिनु पक्कै अनौठो लाग्न सक्छ ।

ज्ञानमणि नेपालले भने "बासट्ठीहरण" र नेपाल खाल्डोका बालबालिकालाई बिचल्लीमा पार्ने गरी रणबहादुरले शहरबाट निष्कासन गरेको तथ्य व्यंग्यात्मक भाषामा लेखेका छन् :

> मुख्तियारी नहुँदै पनि भीमसेन थापाको सल्लाहले "बासट्ठीहरण" जस्तो जोखिमपूर्ण परम्पराविरोधी क्रान्तिकारी कदम चाल्न उनी समर्थ थिए । त्यस बेला उनको हुकूम

> उल्लंघन गर्न कसैको दम चल्दैनथ्यो । देशभरि हलचल पैदा गर्ने बासट्ठीहरणको कार्य त गरेका थिए, त्यस्तै नेपालका तीन शहरलाई हल्लाउने सम्पूर्ण शहरबासीका बालबालिका बिचल्ली पार्ने शहर निष्कासनको आदेश दिनबाट उनलाई रोक्नसक्ने कोही थिएन । शहरमा बिफर फैलियो भन्ने सूचना सुन्ने बित्तिकै बालक राजा गीर्वाणयुद्धविक्रमलाई पनि सो रोग सर्छ भन्ने बहाना गरी नखोपाइएका सारा बालबालिकालाई शहरबाट निकालेर टाढा लैजाने कठोर सरकारी आदेश जारी गरियो । बालबालिका मात्र निकालेर भएन, उनका साथमा संरक्षकको रूपमा बाबु आमा, नभए कोही अभिभावक जानैपर्‍यो । यसरी यी शहरिया रैतीहरू घर छोडेर छोराछोरी च्यापेर रुँदै-रुँदै हिंडे । यस्तो प्रतिप्रकोप गराउने दुष्कार्य गर्न पनि उनी स्वच्छन्द थिए भने अब केको लागि मुख्तियार पद सम्हालेका हुन्, यो रहस्यमयै कुरा छ । (नेपाल २०५० : ६८)

त्यसै गरी, मुरारी अर्यालले १८६१ सालतिरै बिफरको महामारी र सामूहिक निष्कासनको घटना भएको संकेत गर्दै “बिफर आएका र नखोपाइएका केटाकेटीलाई शहरबाट बाहिर पुर्‍याउने प्रबन्ध” राजतन्त्रका ज्यादतीबाट भएको पीडा निकै दर्दनाक भएको उल्लेख गरेका छन् :

> सम्वत् १८६१ सालमा काठमाडौँ उपत्यकामा बिफरको महामारी फैलियो । राजतन्त्रले बालक राजा, त्यति बेला गीर्वाणयुद्ध गद्दीमा थिए र उनको उमेर त्यस्तै सात वर्ष जतिको थियो, लाई बिफर सर्छ भन्ने बहाना बनाएर चौध वर्षमुनि उमेर भएका कसैलाई पनि उपत्यकाभित्र बस्न नपाउने गरी निष्कासनको आदेश जारी गर्‍यो । यो एक यस्तो कठोर आदेश थियो, जसले काठमाडौँ उपत्यका वस्तुतः मानवशून्य बनाइयो । बालक केटाकेटी मात्र बाहिर जाने सम्भावना नरहेकोले उनीहरूका अभिभावक गाईवस्तु सहित रित्तो घरगोठ छाडेर पहाड या मधेशतिर लाग्न बाध्य पारिए । कतिको सम्पत्ति लुटियो र कति फर्केर आउँदा आफ्नो यहाँको सर्वस्व भइसकेको थियो । छोरालाई सितला व्यथा लगाइदिने प्रयास गर्ने बोक्सी भनेर रणबहादुर शाहले पशुपति परिसरमा रहेको सितलामाइको मूर्तिमा तरबार प्रहार गरेर धुजाधुजा पारिदिए । राजतन्त्रको यस किसिमको ज्यादती सैन्यबलको भरमा भएको थियो र कीर्तिपुरको नाककान काटिने प्रसंग र मन्दिरहरू समेत धुलो माटोमा पारिएको समकालिक घटनाको कारण असंगठित जनता त्यसको विरुद्ध आवाज उठाउने परिस्थितिमा थिएनन् । (अर्याल २०६२ : ६१–६२)

शिवप्रसाद डबराल "चारण" ले लेखेका छन्, "यसैबीच काठमाडौँ उपत्यकामा बिफरको महामारी फैलियो र रणबहादुरले सबै बालबालिकालाई बाहिर निकाला गर्न आदेश दिए। उनीहरूलाई मृत्युबाट बचाउन यस्तो आदेश दिइएको थियो, तर यसले जनतामाथि गम्भीर विपत्ति निम्त्यायो। ब्राह्मणहरूको बिर्ता खोस्ने, रानी राजराजेश्वरीलाई देश निकाला गर्ने र बालबालिकाहरूको निष्कासनले आम जनतामा धेरै नै असन्तुष्टि फैलायो" (डबराल "चारण" सन् १९८७ : ५३)।

इतिहासकारहरूका आँखाले सो घटनामा ज्यादती र प्रतिरोध नभेट्टाए पनि, त्यति बेला ज्ञात र अज्ञात कवि एवं अहिलेका जनमुखी इतिहासकार र विश्लेषकहरूले लोक संस्कृतिद्वारा गरिएको प्रत्यक्ष वा अप्रत्यक्ष प्रतिरोधलाई उजागर गरेका छन्। अध्येता प्रेमबहादुर कसाका अनुसार नेपाल भाषाका पुराना गीतमा सामान्यतः राजा-महाराजाको गुणगान गाइएको वा शुभकामना प्रकट गरिएको हुन्छ भने यसमा चाहिँ ठीक उल्टो स्वामी महाराज अधर्मी वा विवेकहीन भएकाले प्रजाको बेहाल भएको आरोप नै लगाइएको छ, जुन कति ठूलो मर्माहत भएको मुटुबाट पोखिएको होला भनेर सहजै अनुमान गर्न सकिन्छ (कसा ने.स. १०९३ : ७७–७८)।

यस गीतिकथामा राज्य-प्रेरित हिंसाले बनाएका घाउ र पीडाको अनुभूति मात्रै पोखिएको छैन, त्यस राज्यका हर्ताकर्ता स्वामी महाराजको अधर्मीपना वा विवेकहीनताको खोइरो पनि खनिएको छ। विषम खालको शक्ति संरचना र सम्बन्ध भएको परिवार, समाज र राज्यमा दमन एवं हिंसा भए झैँ दमन एवं हिंसाविरुद्ध प्रतिरोध पनि हुँदै आएको हुन्छ। समालोचक मल्ल के. सुन्दर लेख्छन् :

> एक अज्ञात व्यक्तिबाट कोरिएको र गाइएको यो गीत दुःखपीडाको कारणले आँसुबाट भिजिनु स्वाभाविक नै भयो। तर दुःख भयो भनेर आँसु बहाउनु एउटा कुरो; दुःख दिने वा दुःखको कारणप्रति असन्तोष व्यक्त गर्ने र विद्रोह गर्ने अर्कै कुरो।...अझै हाम्रो भाषामा धेरै पुरानो गीतको अन्त्यतिर वा बीचमा तत्कालीन सत्तारुढ राजाको स्तुति गर्ने चलन छ। यस दृष्टिले हेर्ने हो भने सितला माजुको गीत हाम्रो पुरानो गीति परम्परामा एक छलाङ हो, भाव र विचार पक्षमा बलियो परिवर्तन हो। (मल्ल २०४५ : ७६)

तर जनकलाल वैद्यले कविले मानवीय भावनाले अभिप्रेरित भई समकालीन नेपाल उपत्यकाका बन्धुबान्धवको सामूहिक दुःख, संकट र बेहाललाई अति नै मार्मिक रूपमा उजागर गरेको यस गीतिकथामा पनि नेवाः जातिले पहिलेदेखि गद्दीनशीन राजाप्रति देखाउने गरेको राजभक्ति "नेपालको छत्रपति श्री रणबहादुर प्रजाले अति दुःख पाए" भन्ने उद्गारमा

प्रतिध्वनित भएको (वैद्य २०५९ : २७२) जिकिर गरेका छन्, जुन दैवी शक्तिको पुकारा गरिएको यस गीतिकथाको हकमा सत्यको निकट देखिँदैन । तथ्यले देखाउँछ, बिफरजस्तो महामारी फैलिएर सम्पूर्ण प्रजाजन सन्त्रस्त भइरहेको बेला प्रजा प्रतिपालन गर्नुपर्ने राजाले प्रजाजनलाई धैर्यले बाँधेर महामारी हटाउने उपाय-उपचारको प्रबन्ध गर्नुको सट्टा त्यस्ता कुनै काम नगरी राजा स्वयं नै अधैर्य भए । राजा नै निरपराध काँचा बच्चाहरूलाई उपत्यकाबाट निष्कासन गर्ने आवेशपूर्ण तथा निर्विवेकपूर्ण हुकुम दिँदै बसेकाले तत्कालीन धर्मचित्त भएका सन्त्रस्त जनताले अदृश्य दैवी शक्तिसँग दुःख पुकार गर्दै आश्रय माग्ने बाहेक अर्को वैकल्पिक बाटो देखेनन् (वैद्य २०५९ : २७२) । यस अर्थमा दैवी शक्तिप्रति भक्तिभाव प्रदर्शन गर्ने जनतालाई धर्मभीरुपना भनी आलोचना गर्नु उनीहरूप्रति अन्याय गर्नु हुनेछ भन्ने उनको विश्लेषणमात्रै सत्य नजिक देखिन्छ ।

आफ्नो दरबार, आफ्नो परिवार, आफ्नो छोरालाई मात्रै बचाउन प्रजामाथि थप बेहाल एवं दुरवस्था थोपर्ने राजा र राज्य न अभिभावक हुन सक्छन्, न त मित्र नै । प्रजाको पालनपोषण गर्नुपर्ने राजा नै आवेशपूर्ण हुकुमले अत्याचार लाद्ने अविवेकी शासक र निर्दयी शासन विद्यमान रहेको अवस्थामा धर्मचित्त भएका प्रजाले “छद्म चेतना” बाटै काम चलाएको हुन सक्छ । त्यसै कारण उनीहरूले दैवी शक्तिको उपासना गरेको हुन सक्छ, वा अज्ञात कविकै धर्मचित्तले नै खुला वा गोप्य रूपमा जारी जनप्रतिरोधलाई वास्ता नगरेको र अर्को विकल्प नदेखेको पनि हुन सक्छ ।

## निष्कर्ष

नेपालको इतिहासमा जनतामाथि दलन गर्ने अविवेकी शासक जनप्रतिरोधका कारण सत्ताच्युत भएका उदाहरण पनि नभएको होइन । युवती, घोडा र नाटकका सौखिन राजा सदाशिव मल्ल किसान प्रतिरोधका कारण काठमाडौँबाट भागेर भक्तपुरमा शरण लिन बाध्य भएका थिए भने शाहवंशीय राजा राजेन्द्रविक्रमले पनि जनआन्दोलनकै कारण सत्ताबाट हात धुनुपरेको थियो (महर्जन २०७७ख) । गोरखा साम्राज्यको विस्तारपछि बलियो भएको केन्द्रीकृत सामन्ती राज्य चलाएका स्वामी महाराजले १८५१ सालमा मधेसी बाहुनी कान्तवतीसँग विवाह गर्दा र १८६२ सालमा ब्राह्मणहरूको बिर्ता र देवीदेवताको गुठी जग्गा हरण गर्दा प्रतिरोध गरेको उदाहरण पाइन्छ (रेग्मी २०७६ : ३०८–३१०) । उनीहरूको प्रतिरोध सजातीय स्वार्थभन्दा पर थिएन, जबकि मूलतः उपत्यकाबासीको, त्यसमा पनि यहाँका आदिवासी नेवाःहरूको, सामूहिक विस्थापनमा त्यस्तो खुला प्रतिरोध देखिएन ।

उत्पीडितहरूको प्रतिरोध खुला रूपमा नदेखिनु, लिखित वा किंवदन्तीका रूपमा पनि नपाइनुको अर्थ सत्ता-शक्तिको दलन र हिंसाको प्रतिरोध हुँदै नभएको निष्कर्षतिर पुग्न मिल्दैन । अन्तोनियो ग्राम्सीदेखि मिसेल फुकोसम्म, जेम्स स्कटदेखि “सबाल्टर्न स्टडीज”

का अध्येताहरूले प्रतिरोधका अनेक आयामबारे अध्ययन, अनुसन्धान र लेखन गरेका छन् । उनीहरूका अध्ययनले देखाउँछन्, प्रतिरोधका अनेक आयाम हुन्छन्, चाहे त्यो खुला होस् या गोप्य, चाहे त्यो सामूहिक होस् या व्यक्तिगत । कहिले हिंसात्मक रूपमा त कहिले अहिंसात्मक र शान्तिपूर्ण रूपमा, कहिले स्वतःस्फूर्त रूपमा त कहिले नियोजित र रणनीतिक रूपमा प्रतिरोधका आयाम जारी रहन्छ (गिरी २०७०; महर्जन २०७७ख) । उनीहरूका विचार संश्लेषण गर्दा देखिन्छ, जसरी उत्पीडक र सत्ता-शक्तिवानहरूको आर्थिक, राजनीतिक र साँस्कृतिक प्रभुत्व (डोमिनेशन) एवं वर्चस्व (हेजेमोनी) समय र स्थितिअनुसार खुला वा गोप्य हुन्छ, त्यसरी नै अधीनस्थ वा उत्पीडितहरूको प्रतिरोध पनि खुला वा गुप्त हुन्छ । "सितला माजुया म्ये" मा कथावस्तुमै प्रजाजनबाट खुला प्रतिरोध भएको दृश्य नदेखिए पनि यसका शब्दबाट, गीत लेखनबाट र गीत गायनसँगै सामूहिक प्रस्तुतिबाट प्रतिरोध जारी रहेको पाइन्छ । यो गीतिकथा पनि नेपाली समाजमा जारी प्रतिरोधको प्रमाण मात्रै होइन, त्यसको अभिव्यक्तिको प्रतीक पनि हो । प्रतिरोधको अभिव्यक्ति विभिन्न तरिकाबाट हुन सक्छ, चाहे त्यो दैवी शक्ति सँगको पुकाराको रूपमा होस् या धर्ममा आश्रय लिने कार्यबाट ।

आफूमाथि भौतिक-साँस्कृतिक रूपमा शासन गर्ने राजा-महाराजाका उत्पीडन र हिंसाको सामाजिक वातावरणबीच पीडित मानिसहरूले मानसिक राहत लिने अभ्यास धर्म र दैवी शक्तिबाट गर्दै आएको इतिहास छ । "छद्म चेतना" को रूपमा क्रियाशील रहेको धर्मलाई अफिम ठान्ने चर्चित वाक्य लेख्नुअघि कार्ल मार्क्सले खास कुरा खुलाएका थिए, "धार्मिक पीडा एकैपटक वास्तविक पीडाको पनि अभिव्यक्ति तथा वास्तविक पीडाविरुद्ध विरोध प्रदर्शन पनि हो। धर्म उत्पीडित प्राणीको चीत्कार (आह) हो। एउटा हृदयहीन संसारको हृदय हो, त्यसरी नै जसरी कुनै आत्मविहीन स्थितिको त्यो आत्मा हो, त्यो जनताको अफिम हो" (महर्जन २०७५ : ७) ।

विश्वमा केही धर्मले शासक वर्गविरुद्ध विद्रोहमा वैचारिक अस्त्रको भूमिका खेलेका थिए भने शासक वर्गका हातमा परेपछिको धर्मको भूमिका शासित वर्गलाई मानसिक रूपमा कज्याउने सबैभन्दा उपयोगी साँस्कृतिक औजारमा सीमित भएको छ । कुनै-कुनै धर्म र सम्प्रदायले दमित र दलितजनमा आशा, आकांक्षा र सन्देश सञ्चार गरेकै आधारमा सबै धर्मले इतिहासमा यथास्थिति तोड्न र शासक वर्ग प्रतिकूल भूमिका खेलेको आकलन गर्न मिल्दैन । ती धर्म र शासक वर्गले अन्धविश्वास फैलाउन, यथास्थिति टिकाउन र निहित स्वार्थ पूरा गर्न खेलेको भूमिकाकै आधारमा धर्म शोषणको माध्यम हो भन्ने अति सरलीकृत बुझाइले न इतिहासका समस्या बुझाउन सघाउँछ, न वर्तमानका सामाजिक जटिलता चिरफार गर्न नै ।

धर्म र धार्मिक अन्धविश्वासलाई पनि प्रतिकारको अस्त्रको रूपमा उचालिएको इतिहासले देखाउँछ—धैरैजसो देशमा किसान विद्रोहले धार्मिक झण्डा उचालेका थिए

भने जनविद्रोहमा उत्रिएका किसानका लागि धार्मिक मुकुण्डो लगाउनु अत्यावश्यक थियो (चट्टोपाध्याय सन् १९९२ : ३१) । यस गीतिकथामा शासकहरूले उत्पीडन र हिंसाले प्रजाको जीवन र जगतको हालत थिलथिलो भएको तथा त्यसको निवारणका लागि सितला माजु वा दैवी शक्तिको पुकारालाई "अन्धविश्वास" मात्रै भनी पन्छाउन मिल्दैन वा सकिँदैन । सूक्ष्म र खुला प्रतिरोध मात्रै होइनन्, प्रतिरोधको कोणबाट विश्वास-अन्धविश्वास-अविश्वास पनि अध्ययन योग्य छन्, किनभने तिनै विश्वासमा शक्ति संघर्ष तीव्र र सघन हुन्छ अनि विश्वासकै आधारमा मानिसहरूको मानसलाई उपनिवेश बनाइएको हुन्छ । विश्वास आफैमा पनि शक्ति संघर्षको मैदान र साँस्कृतिक अन्तरद्वन्द्वको "दबू" (मञ्च) हो भने विश्वासलाई अध्ययनको सेरोफेरोभन्दा बाहिरको ठान्दै बेवास्ता गर्न सकिने कुरै भएन (महर्जन २०७७ख) ।

अतः सितला माजुसँगै अन्य माजुको पुकारा गर्ने प्रजा वा कविमा रहेको "छद्म चेतना" र अन्धविश्वास पनि तत्कालीन समाजका राजनीतिक-आर्थिक-साँस्कृतिक परिप्रेक्ष्यमा चिरफार-योग्य देखिन्छ । तत्कालीन समाज, त्यस समाज भित्रका अन्तरद्वन्द्व र त्यसले बनाइरहेको मनोविज्ञानबारे थप अध्ययन गरियो भने प्रजा वा कविमा देखिएको अन्धविश्वासबारे सही बुझाइ निर्माण हुन सक्छ । दैवी शक्तिप्रति अन्धविश्वास अभिव्यक्त गर्ने क्रममा राजा र शासकहरूप्रति देखाइएको अविश्वास र आक्रोशले तत्कालीन समाजको मनोविज्ञानसँगै सामाजिक अन्तरसम्बन्धलाई प्रस्ट संकेत गरिरहेको तथ्य बुझ्न सकिन्छ । "अन्धविश्वासहरूको अध्ययन मनोविज्ञान र समाज-विज्ञान अन्तर्गत गरिनु जरुरी छ" (कोसंबी सन् १९९३ : ७०) । यसबारे अध्ययन र अनुसन्धान गर्न सबै क्षेत्रका विज्ञान र वैज्ञानिकहरूका लागि मैदान खुला छ । शासितहरूका पीडा र प्रतिरोधको इतिहास लेखनमा रुचि भएका व्यक्तिहरूका लागि त यो मैदान झनै खुला र व्यापक छ ।

## धन्यवाद

महामारीको बेला शासकहरूले देखाउने आत्मकेन्द्रित व्यवहारबारे *नेपाल* म्यागेजिनमा "सितला माजुया म्ये" बारे लेख लेखेको थिएँ (महर्जन २०७७क) । लेख छापिएपछि मानवशास्त्र र समाजशास्त्र पढाउने मित्रहरूबाट विस्तृत लेखनको आस गरेसँगै मित्र प्रत्यूष वन्तबाट *समाज अध्ययन*मा लेख्न प्रस्ताव आएपछि थप अध्ययन अनुसन्धान सहित लेखेको छु । लेखको मस्यौदामा सुझाव र टिप्पणी गर्ने वन्तसँगै चुडामणि बस्नेत, महेशराज महर्जन र आभास भण्डारीलाई धन्यवाद दिन चाहन्छु । सन्दर्भ सामग्री जुटाउन सरसहयोग गर्ने डा. महेशराज पन्त, डा. राजेन्द्र अधिकारी, रवि शाक्य, वज्रमुनि वज्राचार्य, शरद कसा, सावित्री महर्जन र अमन गारूप्रति कृतज्ञ छु ।

## सन्दर्भ सामग्री

अर्याल, मुरारी । २०६२ । *नेपालमा राजतन्त्र : विगत, वर्तमान र भविष्य* । काठमाडौँ : सहस्राब्दी प्रकाशन प्रा.लि. ।

आचार्य, बाबुराम । २०२९ । गोरखा विजयकालका घटना । *पूर्णिमा* २७ : १६३–१७४ ।

आचार्य, बाबुराम । २०६० । *अब यस्तो कहिल्यै नहोस्* । काठमाडौँ : श्रीकृष्ण आचार्य ।

आचार्य, बाबुराम । २०६९ । *जनरल भीमसेन थापा : यिनको उत्थान तथा पतन* । काठमाडौँ : श्रीकृष्ण आचार्य ।

आचार्य, बाबुराम । २०७० । *नेपालको संक्षिप्त वृत्तान्त* । काठमाडौँ : श्रीकृष्ण आचार्य ।

कर्माचार्य-हाडा, गंगा । सन् २००५ । ओझेलमा परेका काजी दामोदर पाँडे । *कन्ट्रिब्युशन्स टु नेप्लिज स्टडीज* ३२(२) : २९९–३२१ ।

कसा, प्रेमबहादुर, मुंम्ह । ने.सं. १०९३ । *बाखं म्ये* । येँ : च्वसापासा ।

कसा, प्रेमबहादुर, मुंम्ह । ने.सं. ११०० । सितला माजुया भजन । *सितु* ५७ : १ ।

कायस्थ, छत्रबहादुर । ने.सं. ११०५ । *श्री ५ रणबहादुर शाहया म्ये मुना* । यल : साहित्यया मू-लुखा ।

केसी, सुरेन्द्र । २०६० । *नेपालको इतिहास र ऐतिहासिक परम्परा* । काठमाडौँ : बौद्धिक संसार प्रकाशन समूह ।

कोसंबी, दामोदर धर्मानंद । सन् १९९३ । *प्राचीन भारत की संस्कृति और सभ्यता* । गुणाकर मुले, अनु. । नई दिल्ली : राजकमल प्रकाशन प्रा.लि. ।

गिरी, मधु । २०७० । मुसहर समुदायको प्रतिरोधका आयाम । *मधेश अध्ययन* १(२) : २१७–२४० ।

चट्टोपाध्याय, देवीप्रसाद । सन् १९९२ । *दर्शनशास्त्र के स्रोत* । नई दिल्ली : राजकमल प्रकाशन प्रा.लि. ।

जोशी, हरिराम । २०७६ । नेवारले यसरी छाडे उपत्यका । *नेपाल*, असार १, पृ. ५ ।

तुलाधर, प्रेमशान्ति । २०७० । *नेपालभाषा साहित्यको इतिहास* । काठमाडौँ : नेपाल प्रज्ञा-प्रतिष्ठान ।

तुलाधर, मानदास, संग्रहकर्ता । २०१३ । *मल्ल शाह कालया मे* । काठमाडौँ : मानदास, सुगतदास ।

नेपाल, ज्ञानमणि । २०५० । *नेपालको महाभारत (भण्डारखाल आदि पर्वसंग्रह)* । काठमाडौँ : साझा प्रकाशन ।

नेपाली, चित्तरञ्जन । २०२० । *श्री ५ रणबहादुर शाह (व्यक्तित्व र शासन)* । येँ : मेरी राजभण्डारी ।

नेपाली, चित्तरञ्जन । २०६० । *जनरल भीमसेन थापा र तत्कालीन नेपाल* । काठमाडौँ : रत्नपुस्तक भण्डार ।

पन्त, नयराज । २०१९ । उपोद्घात । *पण्डित सुन्दरानन्दविरचित त्रिरत्न-सौन्दर्य-गाथा* । धनवज्र वज्राचार्य, सं., पृ. १–९३ । काठमाडौँ : नेपाल साँस्कृतिक परिषद् ।

पन्त, महेशराज । २०७४ । काठमाडौँका द्यौभाजू र पृथ्वीनारायण । *राजधानी*, कात्तिक २५, पृ. ९ ।

प्राचीन नेपाल । २०३० । नेपाल देशको इतिहास । २४ : १–२३ ।

मल्ल, के. सुन्दर । २०४५ । परम्पराबाहिर तीन गीतिकथा । *वेदना* (नेपालभाषा अंक) ४२/४३ : ७४–८० ।

महर्जन, राजेन्द्र । २०७५ । धर्म र मार्क्सवादको साइनो । *कान्तिपुर*, पुस ३, पृ. ७ ।

महर्जन, राजेन्द्र । २०७७क । इतिहासले भन्यो, फेरि भेटौं है । *नेपाल*, वैशाख २ । https://nepalmag.com.np/opinion/2020/04/14/1586846972 मा उपलब्ध; भदौ २१, २०७८ मा हेरिएको ।

महर्जन, राजेन्द्र । २०७७ख । *सिलु र सामाजिक प्रतिरोध* । काठमाडौँ : नेपाल प्रज्ञा–प्रतिष्ठान ।

यमि, धर्मरत्न । २०५८[२०१४] । *नेपालका कुरा (समीक्षात्मक इतिहास)* । काठमाडौँ : धर्मदेवी राजभण्डारी, तिमिला यमि थापा, न्हुछें शोभा तुलाधर, चिरिक शोभा ताम्राकार, कयोदेवी यमि, हिसिला यमि ।

रबर्टसन, टम । २०७७ । बिफर महामारीले हल्लाएको काठमाडौँको सत्ता । *हिमालखबर* । www.himalkhabar.com/news/115365 मा उपलब्ध; भदौ २१, २०७८ मा हेरिएको ।

राज, योगेश । सन् २००७ । इतिहासमा व्यक्तित्वको उत्खनन् : महारोगी सम्बन्धी केही नेपाली कागतपत्र । *स्टडीज इन नेपाली हिस्ट्री एण्ड सोसाइटी* १२(१) : १४१–१७४ ।

राज, योगेश । २०६९ । *क्रमभंग र सम्भार : नेपाली इतिहासलेखनमा हस्तक्षेपका नयाँ सन्दर्भ-विन्दु* । काठमाडौँ : मार्टिन चौतारी ।

राजकर्णिकार, योगेन्द्र । ने.सं. ११३० । लोकमे । *नेवाः लोकवार्ता* । प्रेमशान्ति तुलाधर, सं., पौ. ११४ । यल : त्रि.वि. नेपालभाषा केन्द्रीय विभाग ।

रेग्मी, जगदीशचन्द्र । २०३६ । *नेपालको वैधानिक परम्परा (प्रारम्भदेखि ई. १८४६ सम्म)* । काठमाडौँ : पाठ्यक्रम विकास केन्द्र, त्रिवि ।

रेग्मी, जगदीशचन्द्र । २०७६ । *नेपालमा ब्राह्मणहरूको संक्षिप्त इतिहास* । काठमाडौँ : विद्यार्थी पुस्तक भण्डार ।

वज्राचार्य, धनवज्र, सं. । २०१९ । *पण्डित सुन्दरानन्दविरचित त्रिरत्न-सौन्दर्य-गाथा* । काठमाडौँ : नेपाल साँस्कृतिक परिषद् ।

वज्राचार्य, वज्रमुनि । २०६५ । स्वयम्भूको हारती अजिमा : एक अध्ययन । स्नातकोत्तर तहको शोध प्रबन्ध, बौद्ध अध्ययन, त्रिवि ।

वैद्य, जनकलाल । २०५९ । *नेपालभाषाया प्राचीन काव्य सिर्जना* । काठमाडौँ : नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान ।

वैद्य, तुलसीराम र तीर्थप्रसाद मिश्र । २०५४ । *आधुनिक नेपालको राजनीतिक इतिहास (ई. १७६८–१८४६)* । कीर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिवि ।

शर्मा, बालचन्द्र । २०३३ । *नेपालको ऐतिहासिक रूप-रेखा* । वाराणसी : कृष्णकुमारी देवी ।

श्रेष्ठ, माणिकलाल । २०४५ । नेपालभाषाको प्रतिरोध साहित्य (समालोचना) । *वेदना* (नेपालभाषा अंक) ४२/४३ : ३४–४१ ।

श्रेष्ठ, सुदीप । २०७७ । काठमाडौँका नेवारले ठूलो मूल्य चुकाएको २२३ वर्षअघिको महामारी । *सेतोपाटी*, वैशाख ३ । www.setopati.com/social/203975 मा उपलब्ध; भदौ २१, २०७८ मा हेरिएको ।

श्रेष्ठ, हरि, अनु. । २०३१ । *नेवारी लोक-गीत* । काठमाडौँ : नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान ।

Dabaral "Charan," Shiva Prasad. 1987. The Rape of Garhwal. *Regmi Research Series* 19(2): 25–30.

Des Chene, Mary. 1991. Relics of Empire: A Cultural History of the Gurkhas, 1815–1987. PhD diss., Stanford University.

Heydon, Susan. 2018. Death of the King: The Introduction of Vaccination into Nepal in 1816. *Medical History* 63(1): 24–43.

Landon, Perceval. 1928. *Nepal*. London: Constable and Co. Ltd.

Mulmi, Amish Raj, 2017. Swami Nirgunanda: The Monk Who Would Have Given His Kingdom Away. Available at https://thewire.in/history/swami-nirgunanda-the-monk-who-would-have-given-his-kingdom-away; accessed September 6, 2021.

Oldfield, Henry Ambrose. 1880. *Sketches from Nepal, Historical and Descriptive.* London: W.H. Allen and Co.

Onta, Pratyoush. 1996. The Politics of Bravery: A History of Nepali Nationalism. PhD Diss., University of Pennsylvania.

Regmi, Mahesh Chandra. 1995. *Kings and Political Leaders of the Gorkhali Empire, 1768–1814*. Hyderabad: Orient Longman.

RRS (Regmi Research Series). 1988. Smallpox Epidemic in Chisapani. 6: 740–741.

Slusser, Mary S. 1982. *Nepal Mandala: A Cultural Study of the Kathmandu Valley*. New Jersey: Princeton University Press.

Whelpton, John. 1987. Nepali Politics and the Rise of Jang Bahadur Rana, 1830–1857. PhD diss., School of Oriental and African Studies, University of London.

## लेखक परिचय

लामो समय *मूल्यांकन* र *नवयुवा*को प्रकाशन-सम्पादनमा सक्रिय **राजेन्द्र महर्जन** *मधेश अध्ययन* जर्नलका सम्पादक हुन् । तीन दशकदेखि स्तम्भ लेखन गर्दैआएका महर्जन हाल *कान्तिपुर* दैनिकमा "लसकुस" नामक स्तम्भ लेख्छन् । वैकल्पिक इतिहासको अध्ययन-लेखनमा रुचि राख्ने महर्जनको लेखन र सम्पादनमा तीन दर्जनभन्दा बढी पुस्तक प्रकाशित छन् । महर्जनको पछिल्लो पुस्तक *सिलु म्ये र सामाजिक प्रतिरोध* (२०७७) हो । ईमेल : rajem003@yahoo.com

## परिशिष्ट क

### सितला माजु
(राज कहुकोला, ताल परताल)

सितला माजु स्वहुने परजाया गथिन हवाल ॥धु॥

न्यना मदु खना मदु कचिमचा तय मदु
महाराजया हुकुम जुल ॥१॥
नायखिन बाजन थायका सिपाहीन घेरे याका
कचिमचा पितिनाव छोत ॥२॥
नसा बजि ब्यकुंच्यासे कचिमचा लुकुंछिसे
वनेमाल तामाखुसि पारि ॥३॥
छम्ह मचा लुकुंछिसे छम्ह मचा ब्यकुंच्यासे
छम्ह मचा लुतुलुसे यने ॥४॥

यँ देशं दनावना खोप देशे बास जुल
तलेजु माजु दरसन याये ॥५॥
खोप देशं दना वना बदेपास बास जुल
चण्डेश्वरी दरसन याये ॥६॥
बदेपानं दना वना पलांचोस बास जुल
भगवती दरसन याये ॥७॥
पलांचोकं दना वना दोलाघाते बास जुल
भीमसेन दरसन याये ॥८॥
दोलाघातं दना वना तामाखुसि बास जुल
वने मानि तामाखुसी पारि ॥९॥
दोलखा देशं दना वना तामाखुसि पारि थ्यन
महादेव दसरसन याये ॥१०॥

नय यात नसा मदु तिये यात वस मदु
चोने यात बास जित मदु ॥११॥

लखि मखु पसि मखु न्हाकप्वाचं दाया हल
सिपाहीनं घेरे याना हल ॥१२॥
कइ बीम्ह कछला माजु
लख जायकीम्ह सितला माजु
यनकीम्ह बछला माजुयाके फोने ॥१३॥
थ्व हे मचा रहे जूसा जोलिजोल बखुन बोयके
लुँयागु ओयागु द्वाफो स्वान छाय ॥१४॥

सुरज कोमजो थास चिकुं पुना मचा सित
माम बुबां नुगः दाया खोल ॥१५॥
सीम्ह मचा उयमदु मचा गाले थुनेमदु
परजाया गथिन हवाल ॥१६॥
बाम्ह मचा मामं जोँसे बाम्ह मचा बुबां जोँसे
तामाखुसि कुतकाव छोत ॥१७॥
स्वामि जुजुया धर्म मदया कचिमचा वाके छोत
वनेमाल तामाखुसि पारि ॥१८॥

नेपालया छत्रपति श्री रणबहादुर
परजान अति दुःख सिल ॥१९॥
मते मते सितला माजु सहस्र बिनति छिके
याहुने लोक उधार ॥२०॥

(कसा ने.सं. १०९३ : ७४–७६)

## परिशिष्ट ख

**शीतलामाई**
शीतलामाई हेरि देऊ प्रजाको हवाल ।

कहिले नसुनेको, कहिले नदेखेको
काँचो बालक राख्ने होइन–
महाराजको हुकुम भयो ।
१

झ्याली पिट्दै, बाजा बजाउँदै
सिपाहीले घेर्न लगाए
काँचो बालक निकाली पठाए ।
२
खाने चिउरा काखी च्यापी
काँचो बालक पीठ बोकी
जानुपर्‍यो तामाकोशी पारि ।
३
एउटा बालक पीठ बोकी
एउटा बालक काखी च्यापी
अर्कोचाहिँ घिसारी लग्यौं ।
४
काठमाडौँबाट उठी गयौं
भादगाउँ बास बस्यौं
तलेजुमाईको दर्शन गरौं ।
५
भादगाउँबाट उठेर गई
बनेपामा बास बस्यौं
चण्डेश्वरीको दर्शन गरौं ।
६
बनेपाबाट उठी गई
पलान्चोक बास बस्यौं
भगवतीको दर्शन गरौं ।
७
पलान्चोकबाट उठी गई
दोलालघाट बास बस्यौं
भीमसेनको दर्शन गरौं ।
८
दोलालघाटबाट उठी गई
तामाकोशी बास बस्यौं
जानुपर्छ तामाकोशी पारि ।
९

दोलखाबाट उठेर गई
तामाकोशीपारि पुग्यौं
महादेव दर्शन गरौं ।
१०
खानलाई चिउरा छैन
लगाउन लुगा छैन
बस्नलाई बास कतै छैन ।
११
डोरीले होइन, लठ्ठीले होइन
सिस्नुले पिटीपिटीकन
सिपाहींले घेरा दिइल्याए ।
१२
बिफर दिने कछलामाई
पानी भर्ने शीतलामाई
लैजाने बछलासँग माग्छु ।
१३
यो बालक रहेदेखि
उडाउँछु परेवा जोडी
चढाउँला कुन्दफूल सुनचाँदीको ।
१४
घाम नझुल्किने ठाउँ सेपिलो
बालक मरिहाल्यो चिसो लागेर
आमाबाबु छाती पिटीपिटी रोए ।
१५
पाइँदैन बालक मरेको जलाउन
पाइँदैन खाडलमा पनि पुर्न
प्रजाको कस्तो हवाल ।
१६
आधा बालक आमाले लिई
आधा चाहिँ बाबुले समाई
तामाकोशीमा खसाल्न पर्‍यो ।
१७

शीतलामाई दुःख नदेऊ
सहस्र मेरो बिन्ती
गरिदेऊ लोकको उद्धार ।
१८

(श्रेष्ठ २०३१: १३–१६)

## परिशिष्ट ग

चिसापानीमा बिफरको महामारी
सुबेदार अन्त्य खवास र सुबेदार निरञ्जनलाई राजाज्ञा

(चिसापानीमा) झारा श्रमिकहरूमाझ बिफर फैलिएको छ । त्यसैले, तिमीहरूलाई हाम्रो आदेश छ कि त्यो नाका बन्द गर्नू र कसैलाई पनि सो नाकाबाट पस्न नदिनू । सो नाका बन्द नगरिए धेरै समस्या आउने देखिन्छ ।

तदनुसार, तिमीहरूलाई आदेश छ कि व्यापारी र फेरीवालाहरूलाई आफ्नो मालमत्ता सहित फर्पिङबाट नख्खु खोलाको किनार हुँदै भादगाउँसम्म पुग्न दिनू । चित्लाङतिरबाट फर्पिङसम्म जान चाहिँ नदिनू ।

यदि कसैलाई बिफर लागेको फेला परेमा के बन्दोबस्त गर्ने र त्यस्ता मानिसलाई कहाँ राख्ने भन्ने निर्देशन चौतारिया बम शाहलाई दिइपठाएका छौं । तिमीहरूले पनि सोही बमोजिम गर्नू । त्यहाँबाट महामारी फैलिएछ भने त्यसको जिम्मेवार तिमीहरू हुनेछौ । यसलाई राम्रोसँग बुझेर काम गर्नू ।

कलकत्ता, बनारस, र अरू ठाउँबाट हामीलाई पठाइएका पत्र बोकी आउने हुलाकीहरूलाई फर्पिङ पठाइदिनू । त्यसपछि हामीलाई खबर गर्नू र आदेश बमोजिम काम गर्नू । पत्राचार रोकियो भने धेरै बाधा पर्नेछ, त्यसैले हुलाकीहरूलाई फर्पिङ पठाउन रत्तिभर पनि ढिला नगर्नू ।

चैत्र बदि ५, १८६२

(आरआरएस सन् १९८० : ७४०–७४१)